نيبا
٣٥

يا باغي الخير أقبل

# इस्लामको सिद्धान्त

लेखक

हमूद बिन मुहम्मद अल्लाहिम

नेपाली अनुवादक

अबू फेसल /आबिद बिन सनाउल्लाह मदनी

# مبادئ الإسلام

إعداد/ حمود بن محمد اللاحم

ترجمة

أبو فيصل / عابد بن ثناء الله مدني



The Cooperative Office for Call & Guidance to Communities at Rawdhah Area
Under the Supervision of Ministry of Islamic Affairs and Endowment
and Call and Guidance -Riyadh - Rawdhah
Tel. 4922422 - fax 4970561 E-mail: mrawdhah@hotmail.com P.O.Box 87299 Riyadh 11642

طبع على نفقة : محمد بن إبراهيم بن عثمان العبيد رحمه الله : غفر الله له ولوالديه

# इस्लामको सिद्धान्त


लेखक

हमूद बिन मुहम्मद अल्लाहिम

नेपाली अनुवादक

अबू फेसल /आबिद बिन सनाउल्लाह मदनी



प्रकाशक

उनेजा इस्लामिक सेन्टर अल्क़सीम

पोस्ट बाक्स नं०-८०८ फोन नं०-०६-३६४४५०६

साऊदी अरब

# इस्लामको सिद्धान्त

संसारमा जति पनि धर्महरु छन् उनको नाउँ कुनै मुख्य व्यक्ति वा मुख्य जातिको आधारमा राखिएका छन् । जस्तो ईशाई धर्मको नाउँ हजरत ईसा मसीह को नाउँमा राखिएको छ र बौद्ध मतको नाउँ गौतम बुद्धको नाउँको आधारमा राखिएको छ । जरतुश्त धर्मको नाउँ यस कारणले प्रसिद्ध भएको छ कि यसको जग जरतुस्तले राखेको थियो ।यसै प्रकार यहूदी धर्म एउटा समुदायमा प्रसिद्ध भयो जुन यहूदा कह्लाउदथियो । तर इस्लाम को नाउँ न त कुनै व्यक्ति वा कुनै खास जातिको नाउँ बाट राखिएको छ बरु यसको नाउँ इस्लाम शब्दको अर्थ बाट सम्बन्धित छ ।

## इस्लाम को अर्थ र उसको सत्यता

इस्लाम शब्दको अर्थ अर्वी भाषामा (जसमा कुरआन अवतरित भएको छ ) आज्ञा पालन गर्नु र उपदेश ( शिक्षा) दिने व्यक्तिको कुरालाई विना कुनै शंकाको मानिलिनु । अर्थात अल्लाहको अनुशरण गर्नु र

त्यसको समक्ष सम्पूर्ण समपर्ण गरि दिनलाई इस्लाम भन्दछन् र यही नै इस्लाम को सत्यता पनि हो । यसै कारण मुसलमान अल्लाह को आज्ञापालन गरेर तथा उसको हुकुम बमोजिम त्यसको आदेशहरुलाई मानेर जुन कार्य बाट उसले मिनाही गरेको छ । त्यस बाट बचेर यस संसार जसमा कि त्यो जीवन बिताउछ। आकृत उत्पन्न गर्छ । यसै प्रकार समस्त थोकहरु अल्लाह को आदेश मानिरहेका छन् र त्यसको अधीनमा छन् । यस प्रकारले यो सिद्धहुन्छ कि संसारका प्रत्येक वस्तु एउटा निर्धारित नियम अनुसार र नियमपूर्वक आज्ञाबाट बांधिएको छ। सूर्य, चन्द्र, नक्षत्र, रात र दिन, भूमि, जीव जन्तु, एवम् समस्त व्रहमाण्ड त्यसको नियम अनुसार चलिरहेका छन् । जुन उनको विधाता अल्लाहले उनलाई नियुक्त गरिदिएको छ । यहाँ सम्म कि स्वयं मानिस को स्थिति माथि विचार गर्ने हो भने तिमीलाई थाहा (ज्ञान) हुन्छ । कि त्यो आफ्नो जन्म आफ्नो जीउ

अङ्ग को रचनाको निर्माण को अनुसार तथा आफ्नो दैनिक आवश्यकताहरु जस्तै पानी, भोजन,गर्मी, जाडो, वायु, उज्यालो, आराम र निद्रा जस्तो कार्यहरुमा पनि एउटा नियमको आज्ञाकारी छ। जसमा यस लाई पनि कुनै अधिकार छैन । जस्तो कि अर्का प्राणी(जीव) हरुको छैन। यस प्रकार यो संपूर्ण नियम जस्को यस संसारका प्रत्येक वस्तुले आज्ञा पालन गरिरहेको छ र उसको आज्ञावाट विमुख हुन सक्दैन। त्यो ठुलो शानवाला सृष्टिकर्ता (ईश्वर) ले निर्माण गरेको छ र त्यो महान अल्लाह (इश्वर ) हो कि जन्म दिनु, उपदेश दिनु उसैको अधिकार हो । समस्त सृष्टि उसै विधाता (इश्वर) र सृष्टिकर्ता अल्लाह को आज्ञाकारी छ। यसले गर्दा यो कुरा स्पष्ट हुन्छ कि इस्लाम नै समस्त संसार को धर्म हो किन कि इस्लाम आफ्नो वास्तविक अर्थ मा जस्तो कि तिमीलाई ज्ञान भइसकेको छ। उपदेशक् को उपदेशलाई मानुन् र त्यसमा कुनै किसिमको शङ्का गरे बिना आज्ञा पालन गर्नु छ र

यहां उपदेशक को अभिपाय अल्लाह नै हो (जुन एकेश्वर हो तथा उसको अरु कोही सहभागी छैन ) सृष्टि गर्नु र उपदेश दिनु उसैको कार्य हो । एवं प्रकारले मानिस प्राकृति को सर्वसाधरण नियमको आज्ञाकारी छ । र अर्को किसिमले अरु जीवहरुबाट भिन्नै छ । त्यो यो हो कि उसैको सृष्टिकर्ता अललाहले उसलाई मनपराउनु र मन नपराउन्को स्वतन्त्रता दिएको छ र त्यसले आफ्ना दूतहरु ( रसूलहरु) को माध्यमले जसलाई प्रत्येक युगमा मानिसहरु तिर पठायो र उनिहरु मध्ये अन्तिम दूत हजरत मोहम्मद स.अ. व. जुन हजरत अबदुल्लाह को सुपुत्र हुन् अल्लाहले मानिस समक्ष राम्रो तथा नराम्रो बाटो प्रस्ट गरिदिएको छ । अब जुन ब्यक्ति आफ्नो इच्छाअनुसार रमाएर सोझै बाटोलाई स्वीकार गर्ने छ र अल्लाहले जुन प्रस्तावना हरुका आदेश दिनुभएको छ तिनिहरु बमोजिम गरेर तथा त्यो कार्य जसबाट उसले मनाहि गरेको छ त्यसबाट टाढा भएर आफ्नो कर्तब्वयलाई पूरा गर्ने

छ त्यो इस्लामी नियमअनुसार मुस्लिम हो । र जुन मानिस उसको विपरित गरेर उसको आदेशको उलङ्घन गरि असत्य बाटोमा हिड्नेछ त्यस्ता ब्यक्ति काफिर ( नास्तिक ) हो र जुन दिन (अर्थात प्रलयको दिन) त्यस्ता ब्यक्तिहरु अल्लाहको सामुपर्दा लेखाजोखा हुँदा त्यस्ता ब्यक्तिहरुलाइ आफ्नो-आफ्नो कर्मको परिणाम प्राप्तहुनेछ जस्तोकि अल्लाहले कुरआन भन्ने पुस्तक (इश्वरीयग्रन्थ) मा भनेको छ

(فمن يعمل مثقال ذرة خيرا يره ❖ ومن يعمل مثقال ذرة شرا يره)

"जो कोहि मात्र कण जति सुकर्म गर्नेछ त्यसलाई हेर्ने छ र जो कोहि मात्र कण जति दुष्कर्म गर्नेछ उस्लाई हेर्ने छ। (९९:७-८)

यस योग्यताको आधारमा जुन अल्लाहले त्यसलाई सौपिदिएको छ र त्यो ठुलो वरदान हो जसलाई अल्लाहले उसलाई दिएको छ । समतल भुमि र पानीका समस्त थोकहरु र राति- दिनलाई उसको

सेंवाको लागि ब्यस्त गरिसके पछि त्यसलाई हुकुम दिएको छ कि मात्र ऐकेश्वरको आज्ञाको पालन गर्नु र त्यस संग अरु कसैलाई पनि भागिदार नबनाउनु यस्तो कार्य बाट मिनाहि गरेको छ। उस्को हुकुम बमोजिम कार्य गरेपछि आफ्नो आशिसले परिपूर्ण गरेको छ।

केहि उपहारहरु :-

१. यस प्रकृतिमा फिंजिएका अनेकौं चिन्हहरु बाट फाइदा उठाउनु जुन यो कुराको प्रमाण हो कि अल्लाह (ईश्वर) नै एक्लै साँचो पूजनीय छ। उस बाहेक अरु कोही सच्चा पूज्य छैन।

२. यस संसारमा शान्ति पूर्वक भय आतंक रहित जीवन ब्यतीत गर्नु यो हर बखत प्रसन्नतापूर्वक हुन्छ जस्तो कि हजरत मुहम्मद स.अ.व. ले उल्लेखित हदीसमा भन्नु भएको छ।

(عجبا لامرالمسلم! ان امره كله خير، ان اصابته

سراء شكر، فكان خيراله، وان اصابته ضراء

صبر فكان خيراله)

“साँचो मुसलमान को विषय (जीवन) अनौठो किसिमको हुन्छ। यिनको प्रत्येक कार्य राम्रो हुन्छ यदि त्यसलाई खुशियाली प्राप्त भएको छ भनि त्यो अति उत्तम छ र त्यसलाइ दुख: हुन्छ भनि सन्तोष गरि सहन सक्ने भएमा पनि झन् राम्रो हुन्छ भनि यो कुरा मात्र साँचो मुसलमान को लागि नै हुन्छ (हदीस)।

यस कारण कि उसलाई अवगत भइसकेको छ कि यो संसारमा उसको आगमन किन भएको छ ? उसलाई थाहा छ कि मात्र अल्लाहको पूजाको लागि आएको छ। जसले मानिस र जिन्नात हरुलाई आफ्नो पूजाको लागि जन्म दिएको छ। उसलाई तिनीहरुबाट धन दौलत र भोजनको आवश्यकता छैन। बरु त्यसले समस्त संसारलाई स्वयं धन दौलत र सुख समृद्धि प्रदान गर्नको साथै त्यो अपरम्पार शक्तिशाली छ। जस्तो कि त्यसले

यो जानेको छ कि यस पछि त्यो कहाँ जानेछ, स्वर्गमा त्यो आफ्नो अल्लाह संग भेटगर्नलाई जाने छ । उसको आगमन कहाँ बाट भएको छ अल्लाह को हुकुम बमोजिम आएको छ। जसले उसलाई जन्म दिएको छ, उसलाई धन दौलत सुख समृद्धि स्पष्ट वा लुकेको बहुमूल्य उपहार को वर्षा गर्यो अनेकौं थोकलाई त्यसको सेवामा लगाइदिएको छ ।

(الله الــذى جعــل لكــم الانعــام لــتركبوا منــها ومنــهاتاكلون )

"अल्लाहले नै तिमीहरुका लागि यस्तो किसिमका जीवजन्तुहरु बनाई दिएको छ केहि माथि सवारी गर्छौ र केहिको मासु खान्छौ । ( ४०:७९)

अल्लाहले नै आकाश तथा धर्तिको सृष्टि गरेको र आकाश बाट पानी बर्सायो र त्यसबाट तिम्रो रोजी को लागि फलफूल दिएको तथा नावलाई ( डुङ्गा) पनि तिम्रो आधीनमा गरिदीएको छ । किन कि

त्यो समुद्रमा तिम्रो आदेश बमोजिम हिंडोस र ठुला-ठुला खोलाहरु पनि तिमीहरुको आधिनमा गरिदिएको छ । साथै चन्द्रमा सूर्यलाई पनि तिम्रो काममा खटाइ दिएको छ। जुन सदैव हिडिरहेका हुन्छन् दिन र राति पनि तिम्रो काममा लगाइ दिएको छ।

(الم تر ان الله سخر لكم مافى الارض)

" के तिमीले हेरेको छैनौ कि अल्लाह ले यस पृथ्वीमा भएको समस्त थोकलाई तिम्रो सेवामा लगाई दिएको छ। (२२:६५)

३. मुसलमान यस जीवनमा आफ्नो (कर्तब्य) अमलको शूरुवात गर्छ भने त्यस बेला त्यो थाहा पाउँछ कि यो संसार सदैव बस्ने ठाउँ होइन बरु एउटा मुसाफिर खाना (अस्थायी बस्ने ठाउँ)तथा स्थायी जीवन तिर हिड्ने बाटो हो र त्यस जीवन को लागि पूँजी तैयार गर्ने शुभअवसर हो। तथा अल्लाहको प्रसन्नता प्रप्त गर्ने दौड हो जुन प्रत्येक

राम्रो कार्यको परिणाम दिनेवाला छ। यसले गर्दा मुस्लिमलाई जीवन ब्यतित गर्नु लाई जुन कुरा प्राप्त हुन्छ त्यस समय माथि सन्तुष्ट र खुशियाली मान्नु पर्छ । यसको लागी त्यस लाई थाहा छ कि यी सबै कुराहरु मात्र उपयोग गर्ने वस्तु हुन् ।

४.मुसलमान क्यामत (प्रलय) को दिन आफ्नो अल्लाह को प्रसन्नता प्राप्त गर्नेछ भने त्यो भाग्यवान हुनेछ र यसै प्रसन्नता को महत्वले नरक को दण्ड बाट मुक्ति पाउनेछ र स्वर्गमा जानेछ ।

(فمن زحزح عن النار وأدخل الجنة فقد فاز

وماالحياة الدنيا الا متاع الغرور) آل عمران ١٨٥

(अरु एवं कोही नरक बाट बचेर स्वर्गमा जान्छ भनि त्यस्तो ब्यक्ति सफल हुनेछ। यस संसार को जीवन मात्र मायावी कुरा हो ।)) (३:१८५)

इस्लामको यस छोटकरी विवरण पछि कदाचित तिमीले यसके विस्तार ज्ञान प्राप्ति को लागि इच्छुक हुन्छौ । जस्तो कि तपाईलाई ज्ञात भइसके को छ

कि इस्लाम नै त्यो धर्म हो कि अल्लाहले यसको अतिरिक्त अरु कुनै धर्म स्वीकार गर्दैन। जस्तो कि कुरआनमा आएको छ।

(ان الدين عند الله الاسلام)آل عمران ١٩

निःसन्देह (आर्कषक धर्म) अल्लाह को पासमा इस्लाम हो। (३:१९)

(ومن يبتغ غير الاسلام دينا فلن يقبل منه وهو فى الآخرة من الخاسرين )آل عمران ٨٥

(अरु जो मानिस इस्लाम धर्म बाहेक अरु कुनै धमलाई रोज्दछ भने त्यस लाई अल्लाहले कहिले पनि स्वीकार गर्ने छैन र त्यो मरिसके पछिको जीवनमा निराशहरु मध्ये हुनेछ।) (३:८५)

फेरी यसको विस्तार ज्ञानको उपाय के हो ?

अल्लाह को आदेश र उसको धर्म नीति को ज्ञानको साधन :-

मानिसहरुलाई बुद्धि तथा बिचार गर्ने शक्ति दिइएको छ तापनि त्यो अल्लाह को आदेश र

उपदेश लाई मात्र आफ्नो बुद्धिको आधारमा जान्न सक्दैन किनकि मानिस आफु जस्तै प्राणीको मुटुमा के छ ? जबसम्म त्यो आँफै नै नभनोस् नगरोस् जान्न सक्दैन आफू विचार गर्नुहोस् कि सृष्टिकर्ता अल्लाहको इच्छा कसरी बुझ्न सक्दछ ?। अतः यस प्रमाणको आधारले मानिस प्राणीको लागि नियम बनाउने क्षमता राख्न सक्दैन । किनकि मात्र सृष्टिकर्ताले नै सबैका मुटुका रहस्यलाई बुझ्ने सक्षम छ र त्यसलाई यो पनि थाहा छ कि उनको बर्तमान वा भविष्य को लागि के उचित छ उनिहरुकोलागि नियम बनाउन सक्दछ । अल्लाहको इच्छा र उसको नियमको थाहा पाउन कुनै साधन वहय(आकासवाणी)बाहेक छैन । माात्र नबी, रसूल, दूतहरु मार्फत जन साधारण सम्म पुऱ्याईएको छ । अल्लााह आफ्ना भक्तहरुका लागि दयावान छ । उनलाई उनका इच्छाहरु तथा निर्बल बुद्धिहरु प्रति आश्रित त्यसै छाडेको छैन् कि लावारिस भएर यता उता घुमफिर गरुन् बरु उनको पासमाा आफ्नो

दूतहरु र पवित्र ईश्वरीय ग्रन्थहरु पठायो । उनी सन्देशवाहकहरुले मानिसहरुलाई ती ईश्वरीय ग्रन्थहरुलाई पढेर सुनाउदथे र अल्लाहको आज्ञा र उसको इच्छा र अरु कुराहरु स्पष्ट गर्दथे कि उसको प्रसन्नता कुन कुराबाट प्राप्त गर्न सकिन्छ । साथै यो पनि जानकारी दिन्थे कि अल्लाहको अन्तिम दूत हजरत मुहम्मद स.अ.व. हुन् ।

दूत र रसूलहरुको पहचान (परिचय):–

तपाइहरुलाई यो थाहा भइसकेको छ कि दूतहरुले नै अल्लाहको नियम आदेशलाई चिन्ने हुन्छन् । अरु त्ही मात्र एउटा साधन हो ।अब हेर्नुस दूतहरुको पहचान र उनको सच्चाइको प्रमााणको थाहा पाउनको लागि के के उपायहरु छन् ।

दूतहरुको सत्यताको प्रमाण यस प्रकार छन् :-

१. तपाइहरुलाई थाहा हुनुपर्छ कि दूतहरु आफ्नो लागि आवश्यक वस्तुहरु कसैबाट माग्दैनन् । बरु उनीहरु जन साधरणको भलाईको लागि सदैव नै

प्रयत्न गर्दछन् र उनीहरुलाई हानिकारक कार्यबाट भयत्रास्त दिलाउदै गर्दछन् ।

२. उनीहहरु जुनकुराको निमन्त्रण दिन्छन् र जुन लुकिएका रहस्यहरुलाई जाहिर गर्छन् । उनलाई कुनै मानिसले आफ्नो बुद्धि र ज्ञानले बुझ्न सक्दैन तथा जुनकुरा तिनीहरु भन्दछन् घटना र सत्यताले उनलााई पुष्टि गर्छन् ।

३. प्रत्येक दूतलाई मुख्य प्रमाण(चमत्कार) दिइएको हुन्छ जसलाई अस्वीकार गर्न र उस जस्तो प्रमाण दिन सकिन्न यसको एउटा उदाहरण हजरत नूह स.अ.व.हुन् । उनले आफ्नो जातिलाई ललकारेको थियो कि उनलाई समाप्त गरि देउन्(अर्थात उहाँलाई मारि देउन्) । तर वहाँका समुदायका मानिसहरुले त्यस्तो गर्न सकेनन् । जब कि हजरत नूह उनको बीचमा बिना किन कुनै रक्षकको नै हुनुहुन्थियो । यसै प्रकार हजरत इब्राहीम, हजरत हूद, को पनि यही नै उदाहरण हो । हजरत मूसालाई अल्लाहले एउटा लाउरो दिएको थियो ।

उनको इच्छा बमोजिम त्यो लउरो सर्प वा लउरो बन्ने गर्दथ्यो । एवंम यसको साथै हजरत ईशाले जन्मदेखि अन्धो वा कुष्ट रोगीहरुलाई निको पार्ने गर्दथे एवंम यसको साथै अल्लाहको आदेश बमोजिम मृतक भएका मानिसहरु लाई जिउँदो पार्न सक्नु हुन्थ्यो । हाम्रो आदरणीय ईश दूत (नबी) हजरत मुहम्मद स.अ.व. आफ्नो साथ कुरआन लिएर आउनु भयो जब कि तपाई अनपढ हुनुहुन्थ्यो साथै लेख्नमा पनि कोरो नै हुनुहुन्थ्यो र यो भन्दा पहिले कुनै लेखपढ गर्न जस्तो चीज कसैबाट पनि सिक्न् भएको थिएन् । बरु उहाँकाआमा बाबु सानैमा नै प्रलोक भइसक्नु भएको हुनाले उनी टुहुरो हुनुहुन्थिए । जबकि अरब देशका बासिन्दाहरु यी जस्तो कुरआन पेश गर्न सकेनन् र न त यी १० दस सूरत(अध्याय) सम्म पेश गर्न सकेनन् । अन्तमा वहाँले सम्पूर्ण अरबबासीहरुलाई ललकारनु भयो कि यो जस्तो एउटा अध्याय मात्र लिएर

आउनु तर कसैले पनि प्रस्तुत गर्न सकेन् । कदापि कसैले पनि ल्याउन सक्दैन ।

(وَلَئِنْ أجتمعت الانس والجن على ان يأتوا بمثل هذاالقرءان لايأتون بمثله ولوكان بعضهم لبعض ظهيرا )الاسراء ٨٨

(हे सन्देशवाहक भनि देऊ कि यदि मानिस र जिन्न यस कुराको लागि भेला र सहमति भई जाउन् कि तिनी आपसमा मिलेर यो कुरआन जसतो अर्को कुरआन बनाई लाउन् भने तिनीहरुले बनाउन् सक्दैनन् यदि उनीहरु यसकाम को लागि आफन्तमा एक अर्कोको मद्दत र सहायता गरुन त पनि हुन सक्दैन । अल्लाहले प्रत्येक समुदायमा तिनीहरु मध्येबाट एउटा दूत पठाएको छ र त्यसलाई त्यसैको समुदाय अनुसार एउटा चमत्कार दिएको थियो तर ती सबै दूतहरु विशेष जातिको लागि थिए र अन्तिम ईशदुत थिएनन् । यसले गर्दा उनीहरु पनि सोही जाति

सोही समुदायको साथै नै समाप्त भए किन्तु हजरत मुहम्मद स.अ.व.को नबूअत(ईशदुतत्व) अन्तिम रिसालत (ईशदुतत्व) थियो । त्यसैले अल्लाहले वहाँलाई यस्तो चमत्कार दियो जुनकि मानिस पृथ्विमा रहुन्जेल सम्म समाप्त हुने छैन । हजरत मुहम्मद स.अ.व. भन्दा पहिलाका दूतहरुका चमत्कारहरु प्राय: हेर्नसक्ने पदार्थहरु मध्ये जस्तो थिए । परन्तु कुरआन त एउटा ज्ञानिक बुद्धि विवेकको चमत्कार हो किन कि युगको गतिको साथ मानिसको बुद्धि विवेक र ज्ञानको तरक्की ( उन्नती) को प्रभाव यस माथि पर्न न सकोस् ।
जुनबेला तपाईले अल्लाहको धर्म अर्थात इस्लामलाई जान्ने साधन थाहा पाउनुहुन्छ त अब हेर्नुस इस्लाम के हो ? जसलाई अल्लाहले मनपराएकोछ र जसलाई आफ्नो भक्तहरुबाट स्वीकार गराएको छ । मसंग हिँड् किनकि त्यसलाई सविस्तार को साथै अवगत गराऔं । जस्तो कि यो भन्दा पहिला जानि सकेको छौ । कि इस्लाम धर्म अल्लाह लाई सम्पूर्ण

समपर्ण गरिदिनु र उस को आज्ञा को पालन गर्नु नै हो र त्यो अल्लाह एउटै छ जसके कुनै अंशियार छैन । उसको आज्ञा को पालन गर्नुछ। केही प्रत्यक्ष कार्य यस्तो छन् जसलाई मानिसले अल्लाह को आज्ञा पालन गर्नुछ। केही प्रत्यक्ष कार्य यस्तो छन जसलाई मानिसले अल्लाह को आज्ञा पालनको लागि र उसको विधि अनुसार जसलाई मानिसले अल्लाहको आज्ञा पालनको लागि र उसको विधि अनुसार जसलाई अल्लाहका दूतहरुले बताएका छन् त्यसलाई पूर्ण गर्छ। तिनी दूतहरु मध्ये हजरत मुहम्मद स.अ.व. आखिरी (अन्तिम) दूत हुन् उनको धर्म नीति नै अन्तिम धर्म नीति हो। मात्र अल्लाह को पूजा नै जो हजरत मुहम्मद स.अ.व. (अन्तिम दूत) को धर्म नीतिको अनुसार हुनेछ त्यही इस्लाम हो । अरु यस को विरुद्ध भएमा गलत हुनेछ। यस कारण कि त्यो त्यस नियमको बिरुद्ध हुनेछ जुन अल्लाहले तोकेको छ । किन कि यी कार्यहरु हृदयमा पाइने धर्म को साधन हुन्छन्। यसैले जुन

कामको प्रेरिक धर्म र हृदयिक विश्वास होस त्यही प्रष्ट र गोप्य आधारमा साँचो धर्म इस्लाम हो । र त्यहीहो जसको माध्यम बाट भक्त आफ्ना पालनहार र सृष्टिकर्ता को प्रसन्नता प्राप्त गर्न सक्दछ र सो वस्तु कयामत (प्रलय) के दिन अल्लाह को दण्ड बाट मुक्ति दिलाउँने छ ।

इस्लाम पाँच कृतिमा आधारित छ ।

(لااله الاالله محمد رسول الله)

१. लाइलाहा इल्लल्लाह मोहम्मर्दुरसुलुल्लाह - अल्लाह बाहेक अरु कोही पूजनीय छैन । मोहम्मद स.अ.व. अल्लाहको रसूल (दूत) पैगम्वर हुन को साक्षी । उल्लेखित साक्षी र गवाही को तात्पर्य यो हो कि अल्लाह नै साँचो पुजनीय छ । अल्लाह बाहेक अरु पूजनीयहरु सबै असत्य हुन् जुनकि कसै लाई लाभ व हानि पुऱ्याउन् सक्दैनन् र तिनी पूजागर्ने योग्य पनि छैनन् । यसै प्रकार ले त्यो आदेशक छ जो सृष्टि र जीवनको समस्त साधन

लाई चलाउन सक्दछ। यसै प्रकार मानिसहरु कुनै निर्णय उसको नियम र आदेश को बिरुद्ध न गरुन्।

(ان الحكم الا لله امر الاتعبدوا الا اياه )يوسف ٤٠

"निर्णय को अधिकार मात्र अल्लाहलाई छ उसले आदेश दिएको छ कि उसको बाहेक कसैको पूजा नगरुन् ( १२:४०)

यसले गर्दा आवशयक छ कि मानिसहरु उसलाई छोडेर अरु कसै को पूजा नगरुन्।

(ان الحكم الا لله يقص الحق وهو خير الفاصلين

)الانعام ٥٧

"निर्णय को अधिकार होइन, तर अल्लाहको लागि मात्र उ साँचो वर्णन गर्दछ र साँचो उचित फैसला गर्नेवाला छ।" (६:५७)

यसैले उसको आदेश बाहेक प्रत्येक आदेशको गिन्ती असभ्य आदेशमा हुनेछ जसमा अज्ञानता जुल्म (अत्याचार तथा पथभ्रष्टता )को अतिरिक्त अरु केहि छैन।

(افحكم الجاهلية يبغون ومن أحسن من الله حكما

لقوم يوقنون ) المائده ٥٠

के तिमीहरु अज्ञानता को नियम चाहदछौ ? र अल्लाह भन्दा राम्रो नियम बनाउने वाला को छ ? उनीहरुको लागि जुनले अल्लाह माथि विश्वास राख्दछन (५:५०)

यो पनि आवश्यक छ कि सबै प्रकारका पुजा ,उपासनाको प्रयोग मात्र अल्लाहको लागि हुनु पर्दछ । यसै प्रकार कसैको लागि यो उचित होइन कि त्यो अल्लाह बाहेक अरु कसैको समक्ष आफ्नो टाउकोलाई झुकाओस,दण्डवत गरोस अथवा घोप्टियोस वा अल्लाह बाहेक कसै सित प्रार्थना र उजुर गरोस , अथवा कुनै प्राणी सित कुनै थोक मागोस जसलाई अल्लाह बाहेक कोही दिन सक्दैन ।अब यस पछि आयो कुरा मोहम्मद स. अ. व. ले अल्लाहको दूत हुनको गवाहीको माँग त यो यस कुरालाई स्वीकार गर्नुछ कि उनी अल्लाहको

तर्फबाटै दूत हुन र यसै प्रकारले यो स्वीकार गर्नु कि उहाँले जुन सूचना र शुभ सन्देश तथा आदेश अल्लाहको तर्फबाट दिनु भएका छन् ती सबै कुरा साँचो र ठीक छन्। भूतकालको कुरामा जसको सूचना उहाँले दिनु भएको ती सबै ठीक छन्। यसै प्रकार भविष्यवाणी वा लुक्नु भएका रहस्यहरुको प्रमाण दिनु पनि यस मांगमा छ। यस कारण कि प्रत्येक ती कुराहरु जसको बारेमा उहाँले सूचना दिनु भएका छन् ती अल्लाहको तर्फबाट वह्य(ईश्वाणी र आकाशवाणी )हुन्छन्।

(ان هو الا وحى يوحى ❖ علمه شديد القوى ) النجم ٤-٥

"त्यो होइन तर आकाशवाणी जुन अल्लाहको तर्फबाट हुन्छ। उसलाई एउटा शक्तिमान दूतले सिकाएको छ (५३:४-५)

यसैले यिनी कार्यहरुमा जसको आदेश उहाँले दिनुभएको छ त्यसलाई स्वीकार गर्नु र उनी सबैकार्यहरुबाट बच्नु आवश्यक छ जसबाट बाच्नु लाई आदेश दिइएको छ र यी सबै मात्र यस कारण

कि हजरत मोहम्मद स.अ.व) को अनुसरण गर्नु अल्लाहको अनुसरण हो । हजरत मोहम्मद स.अ.व. ले अल्लाह को तर्फबाट उसको नियम र आदेशलाई हामी सम्म पुऱ्याउने माध्यम हुनुहुन्छ । यसैले हजरत मोहम्मद स.अ.व का कुराहरुलाई अस्वीकार गर्नु इस्लामको विरुद्ध हुन् । किन कि दूतको आज्ञापालन न गर्नु उनी अल्लाहको आज्ञापालन नगर्नु हो जसले उसलाई पठाएको छ र उसको अनुशरण गर्नु नै अल्लाह को अनुसरण गर्नु हो ।

२. नमाज (सलात) :- इस्लामका कृत्यहरु मध्ये दोश्रो कृत्य नमाज़ हो । जो शरीरको पवित्रता बाट शुरु हुन्छ अरु आत्मा र जिउको पवित्रतामा समाप्त हुन्छ यसलाई दिनभरिमा पाँच पटक पढनु पर्छ । यसले गर्दा कि जब मानिस आफुलाई पालने पालनहार को पूजाबाट लाप्रावह हुन्छ त दोश्रो पटक आफुलाई पालने पालनहार बाट सम्बन्ध ताजा गर्दछ अर्थात यो त्यो बाटो हो जसको मार्फत मानिस शान्ति प्राप्त गर्छ । सब भन्दा पहिलो कार्य

जसलाई मानिसले दिउसो बिहान देखि आरम्भ गर्छ त्यो नमाज हो किनकि दिवाको पहिलो नमाज को समय सूर्योदय भन्दा पहिल्यै देखि नै शुरु हुन्छ र सूर्यास्तमा समाप्त हुन्छ । दिवाको पहिलो अधिल्लो भागमा कामको अन्तर पछि कुनै प्रकारको भूल हुनसक्दछ यसले गर्दा दोपहर पछिको नमाज जोहर को समय आउछ ताकि मानिसलाई उसको पवित्रता दोश्रो पटक प्राप्त होस् र त्यो आफ्नो अल्लाह को साथ उसलाई जोडीदिओस ताकि त्यो आफ्नो जीवनका सबै विषयहरुमा कृपा र सत्यताको साथै साथ मृत्यु पछि दयाको प्रार्थाना गरुन् ।

यस प्रकार नमाजले पापहरु तथा त्रुटिहरु को त्यस फोहरलाई जुनकि उसलाई लागिएको छ । नमाजले मेटाई दिन्छ । यसै प्रकार एउटा नमाज देखि अर्को नमाज सम्म हुँदै गर्दछ । यहाँ सम्म कि त्यो आफ्नो पालनहार सित भेटदछ (अर्थात

मरिसके सम्म) हजरत मोहम्मद स.अ.व.ले भन्नु भएको छ ।

عن ابى هريرةرضى الله عنه قال: سمعت رسول الله صلى الله عليه وسلم يقول : ((ارأيتم لو ان نهرا بباب احدكم يغتسل منه كل يوم خمس مرات ، هل يبقى من درنه شيء ؟ )) قالوا : لايبقى من درنه ، قال: ((فذلك مثل الصلوات الخمس يمحو الله بهن الخطايا )) متفق عليه .

"यदि तिमीहरु मध्ये कसैको घरको अगाडि भएर कुनै खोला (नदी, दरिया) बगेको छ भने त्यो मानिस दिउसोमा प्रत्येक दिन पाँच पटक नुहाउछ भने के उसको जिउमा फोहर मैला बाकी रहन्न सक्दछ ? हजरत मोहम्मद स.अ.व. का साथीहरु (सहावा) ले भने कदापि रहदैन । फेरि वहाँले भन्नु भए । यसै प्रकार पाँच बखतका

नमाजहरु पनि हुन् जसको मध्यमबाट अल्लाहले दोषहरुबाट मुक्ति गरिदिन्छ ।" (हदीस)

मस्जिदमा यिनी नमाजहरुलाई पढनाले समस्त मुसलमानहरुलाई यस्तो वातावरणमा जोडी दिन्छ कि एकअर्कामा भाइचारा (भ्रातृत्व)र सहायता वा दया बाट परिपूर्ण हुन्छ । नमाजले निर्लज्ता र पाप तथा दुष्कर्मबाट बचावहुन्छ र समस्त विषयहरुमा भक्तजनको सहायक हुन्छ ।

(ياايها الذين ءامنوااستعينوا بالصبر والصلاة ان الله مع الصابرين ) البقرة ٥٣

" तिमी सहायता र सहनशीलता प्राप्त गर नमाज बाट । (२:१५३)"

३. जकात (धर्मादाय):- जकात धन द्वारा एउटा पूजाहो जो धनी वर्गहरुको धनमा सबै प्रकारका धनमालको निर्धारित मात्रामा एउटा मुख्य सम्बन्ध बाट बर्सैनी एक पटक दिनु आवश्यक हुन्छ । जुनकि धनवान बाट लिएर दरिद्रहरुलाई उनको

आवश्यकताहरुलाई परिपूर्ति गर्न को लागि दिइन्छन् । यस प्रकारले एकातिर निर्धनको आवश्यकता पूर्ति गर्न को साधन हो र अर्को तिर धनवानहरुका लागि पवित्रताको साधन छ ।जुनकि त्यसलाई धनको प्रेमवाट मुक्ति दिन्छ जसको प्रेम मानिसको आत्मामा राखिएको छ ।

(وتحبون المال حبا جما ) الفجر ٢٠

"अरु तिमीहरु धन बाट धेरै प्रेम गर्दछौ । ८९:२०

जस्तो कि त्यो (जकात) धनमा बढोत्री गर्छ र त्यसलाई उन्नति गर्छ । दान गर्नाले धनमा कमी हुँदैन बरु त्यो त्यसलाई बढाँउन्छ (हदीस)

यस बाट धनमा बढोत्री र मानिसहरुलाई निर्दयता,निष्ठुरता सित बचाउन र स्वार्थपरायणता बाट पवित्रता प्राप्त हुन्छ । दान (जकात) मुसलमानहरुको बीचमा सामाजिक सहायता का प्रदर्शनहरु मध्ये एउटा प्रर्दशन हो किनकि तिनीहरु म्ध्ये धनवान मानिसले आफ्नो निर्धन भाई माथि

दया गरोस् र निर्धनले धनवान सित प्रेम गर्न थालोस् । सब भन्दा राम्रो कुरा यो हो कि दान जकात अल्लाह को पूजा हो र उसलाई खुश पार्नको साधन हो ।

४. रोजा (बर्त बस्नु) :- रोजामा अल्लाह को आज्ञापालनका केहि अंशको पूर्ति हुन्छ र त्यसै को अनुसरण र आफ्नो इच्छाको पूर्ति का केही लक्ष्यहरुलाई शक्ति प्राप्त हुन्छ। यसै प्रकार त्यो एउटा पूजा र अल्लाहको नजिक हुन्को लक्ष्य लाई शक्ति र चरित्रलाई पवित्र गर्नको साधन हो। इन्द्रीयहरुलाई आफ्नो बसमा राख्न र चरित्र तथा परोक्षतलाई सही राख्नको साधन हो र त्यो अल्लाह को डर (ईश्भय–तक्वा) को साधन हो ।

(ياايها الذين آمنوا كتب عليكم الصيام كما كتب على الذين من قبلكم لعلكم تتقون ) البقرة

“हे अल्लाह प्रति विश्वास राख्ने मानिसहरु तिमीहरु मथि रोजाहरु (बर्त बस्नु)अनिवार्य

गरिएका छन् । जसरी तिमी भन्दा अधिका मानिसहरु का लागि अनिवार्य गरिएका थिए । यसले गर्दा कि तिमीहरु संयमी बनी जाऊ अथवा तिमीहरुमा ईश्भय उतपन्न होस । " (२:१८३)

उपवास पहिला जातिहरु माथि पनि अनिवार्य (फर्ज) थियो उनको हृदयलाई स्वच्छ गर्नका लागि तथा दैनिक जीवनमा अवरोध र त्यसबाट सहायता लिन हुने भएकोले अनिवार्य (फर्ज) गरिएको थियो किनकि त्यो सहनशीलताको एउटा किसिम हो साथै सहनशीलता प्राप्त गर्नको महानसाधन पनि हो ।

(ياايها الذين آمنوا استعينوا بالصبر والصلاة ان الله مع الصابرين ) البقرة ١٥٣

"सहनशीलता तथा नमाजको माध्यमले साहायता प्राप्त गर ।" (२:१५३)

५- हज : इस्लामका कृत्यहरु मध्ये यो कृत्य अर्का कृत्यहरुको साथ यिनीको समस्त लक्ष्य वा अभिलाषाहरुबाट (आकाङ्क्षाहरु) मिल्दो जुल्दो छ ।

यसको लागि उपवासहरुमा सहनशीलता खानापानी तथा इन्द्रियहरुको इच्छालाई छाड्ने शक्तिको अभ्यास हुन्छ । यसै प्रकार हजमा पर्ने यात्राका कठिनाइहरु वा स्वास्नी,नानीहरु त्था नगर,मुलुक, देशलाई छोड्नमा धैर्य गर्नुपर्छ र यो जकात जस्तो छ किन कि यसमा धन को खर्च हुन्छ अरु नमाज संग यसको मिल्ने सम्बन्ध यसतो छ कि शारीरिक कियाकलापहरुमा धेरै जस्ता कुराहरुमा जस्तै तवाफ(परिकमा)सई (सफा मर्वा भन्ने पहाडी को माझमा ' दगुर्नु)हुन् र हजका कर्तब्यहरुलाई पूरा गर्नका लागि यताउता आउनु जानु हुन्छ तथा त्यसमा तल्बिया वा अजकार(प्रार्थणा) जसता अर्का कार्य पनि छन् । यस प्रकार त्यो एउटा धनमाल, शरीरिक,मौखिक,हृदयसङ्कलप(नीयत)को पूजा हो । तथा नमाज संग यसप्रकारले मिल्न जुल्न सक्छ । कि यसमा सबै मुसलमानहरुले एउटै समयमा एउटै स्थानमा भेला हुन्छन् अर्फाको दिन सबै मुसलमानहरुको लुगा पोशाक उनको देश र भाषा

चाहिँ भिन्न भिन्नै हुँदा हुँदै पनि एउटै हुन्छ र यो एउटा यस्तो सम्मेलन हो । जसमा मुसलमानहरुका सबै दलहरु विभिन्न देशहरुका विभिन्न रङ्ग र विभिन्न मुलुकहरु भएको हुँदाहुँदै पनि भेला हुन्छन् र आवश्यक छ कि तिनी यस सम्मेलन्मा मिलेर सबै आफ्नो स्थिती माथि अध्ययन गरुन आफु माथि कठिनाई र समस्याहरु माथि छल्फल् गरुन किनकि हजरत मुहम्मद स.अ.व. ले अर्फात तथा मिना भन्ने स्थानको ठाउँमा सम्पूर्ण जन समूहहरुलाई सम्बोंधित गर्नु भयो र अल्लाहको आदेश उनीहरु सम्म पुऱ्याउनु भयो । र तिनीहरु माथि अल्लाहलाई साक्षि बनाएर भन्नु भएको थियो ।कि वहाँले उनीहरु सम्म अल्लाहको सन्देश तथा आदेश पुऱ्याइदिएको । अरु मानिसहरुका लागि अल्लाहको दूत हजरत मुहम्मद स.अ.व.को जीवन पद्धतीमा उत्तम तथा राम्रो नमूना छ ।

यी सम्पूर्ण कार्य वास्तवमा अल्लाहको आदेशको आज्ञा पालन गर्नु हो जबकि हजरत इब्राहीम अ.स.

काबालाई बनाउने काम पुरा गरिसकेको थियो भने उन्लाई अल्लाहले आदेश दिएको कि तिमी मानिसहरुलाई सूचना दिनुस कि तिमी माथि अल्लाहले आफ्नो पवित्र घर काबाको हज गर्नु अनिवार्य गरेको छ । यसले गर्दा हज गर्दै गर्नु

(وَاذِّنْ فِى النَّاسِ بِالْحَجِّ يَأْتُوْكَ رِجَالا وعلى كل ضامر يأتينَ من كل فجٍ عميق ) الحج ٢٧

" तथा मानिसहरुमा हजको लागि घोषणा गरिदिनुस कि तिनीहरु आउन तिम्रो पासमा पैदल तथा दुब्लो पात्लो ऊँटमाथि सवार भएर सबै टाढा भन्दा टाढा मुलुकहरु देखि । (२२:२७)

यदि मानिसले इस्लामका यिनी सबै कर्महरु लाई अल्लाहलाई पालनकर्ता मान्दै, इस्लामलाई धर्म स्वीकार गरेर, हजरत मोहम्मद स.अ.व. माथि नबी र रसूलको हैसियतले ईमान राख्दै पूरागर्छ र सोही गर्दैमा उसको मृत्यु हुनगएको अवस्थामा उसको अन्त अल्लाह को आदेशले अल्लाहको प्रसन्ता र

स्वर्गमा प्रवेश (वास) गर्नु छ ।यदि उसले यो कार्यलाई हृदयमा बिना ईमानको गरेकोछ भनि उसलाई कुनै लाभ हुँदैन र त्यो आफ्नो पालनहारको दण्ड सजायबाट बाच्न सक्दैन ।उसको रुप अनुहार मुसलमान जस्तो भएपनि उसलाई कुनै लाभ हुन् सक्दैन । यसले गर्दा मुटुमा ईमान हुनु अति आवश्यक छ ।

## ईमानका कृत्यहरु(कर्म)

इस्लामका कृत्यहरु को वर्णनमा यो कुरा आईसके को छ कि उनी कृत्यहरुमा सबभन्दा ठूलो कृत्य यो कुराको साक्षी दिनुछ कि अल्लाह बाहेक अरु कोही पूजनीय छैन तथा हजरत मोहम्मद स. अ .व. अल्लाहको रसूल हुन् ।

हजरत मोहम्मद स अ व को रसूल हुनको प्रमाण (गवाही) दिनुको आग्रह यस कुरामाथि ईमान ल्याउनु छ कि वहाँले (हजरत मोहम्मद स अ व) अल्लाहको तर्फबाट सम्पूर्ण मानिसतिर सन्देशवाहक छानिएर पठाइएका छन् । र उनी अरु समस्त

कुराहरुमा जसलाई हजरत मोहम्मद स अ व ले सूचना दिनु भएको छ उहाँलाई साँचो जान्नु र ती सबै आदेशहरुको पालन गर्नु जसको वहाँले आदेश दिनु भएको छ। जस कार्यबाट वहाँले मिनाही गर्नु भएको छ सो कार्यहरुबाट बाच्न आवश्यक छ। ती सबै कार्यहरु जसको आदेश दिइएको छ यही नै ईमानका कृत्य हुन अरु तिनका संक्षिप्त बयान निम्नलिखित छ।

१ अल्लाह माथि ईमान: अल्लाह माथि ईमानको आग्रह यस कुराको पक्का तथा पूरा विश्वास हुनु हो कि अल्लाहे सम्पूर्ण सृष्टि मध्ये कसै माथि निर्भर छैन। (لَمْ يَلِدْ وَلَمْ يُوْلَدْ)

"त्यो कसैको बाबु होइन, अरु कसैको छोरा पनि होइन" (११२ :३)

त्यो स्वास्नी तथा पुत्रहरुबाट स्वच्छ तथा गुणहरुमा विशेषताबाट परिपुर्ण छ।

(الله لااله الاهو الحى القيوم لاتأخذه سنة ولانوم له ما فى السماوات ومافى الارض من ذاالذى يشفع عنده الابإذنه )البقرة٢٥٥

अल्लाह बाहेक कोही पूजनीय छैन । त्यो अमर तथा चिरञ्जीवी छ । उसलाई निद्रा तथा ऊँघ आउदैन । आकाश र पृथ्वीमा जे छ सबै उसै को हो । को छ जुन उसको नजिक कसैको बारेमा सिफारिस गर्न सक्छ तर उसैको हुकुम बमोजिम (२ :२२५)

यसलेगर्दा यस कुरा माथि ईमान ल्याउनु आवश्यक छ कि त्यो अमर छ। उसलाई निद्रा आउदैन अरु त्यौ कुनै कार्यबाट लाप्रबाह पनि हुदैन। संसार भरिको तमाम चिज विज उसैको नै हो। कसैको सिफारिसबाट उसलाई लाभ हुदैन । तर त्यस मानिसलाई जसको त्यसले अनुमति देउन्। त्यो एकलै छ उसलाई पालनहार हुनमा, उसलाई पूजनिय हुनमा, उसको नाउँ तथा गुणहरुमा उसको

कोही अंशियारा तथा साझेदार छैन । उसका प्राणीहरुको बीचमा कुनै माध्यम र अभिप्राय छैन । उसैको हाथमा उसैको मार्फत प्राणीहरुको रोजी ( जिवनमा आवश्यक पर्ने सामानहरु) छ । अरु उनीहरुको लाभ, हानी, जीवन तथा मृत्युको अधिकार उसैको हातमा छ । तिनीहरुको प्रार्थना त्यो सुन्छ । तथा संकट (दुखको समयमा) त्यो तिनीहरुको प्राथनालाई जब तिनीहरु त्यसलाई याद गर्छन स्वीकार गर्दछ । सबै प्राणीहरु त्यसै माथी निर्भर छन् र उ कसै माथि निर्भर छैन । यस प्रति ईमान ल्याउनु तथा विश्वास गर्नु मानिसलाई यस्तो बनाई दिन्छ कि त्यो अल्लाह बाहेक अरु कसै सित डराउदैन र अल्लाह बाहेक कसै बाट आशा राख्दैन ।अल्लाह बाहेक सबै प्राणी कसैको लाभ वा हानी पुरयाउने सकिदैनन् । यस कुराको अभियोग मानिसहरु गर्छन कि अल्लाह को पास उनीहरुको सिफारीस गर्नेहरु छन् होलान जसलाई तिनीहरु औलिया को नामबाट याद गर्छन । यस्तो विश्वास

राख्ने मानिसहरुले उनीहरुको कब्र(चिहान) माथि सिफारीस को आशामा र तिनी बाट लाभ प्राप्तीको दृष्टीकोणले जान्छन् । यो असत्य कुरा हो र अल्लाहको साथ शिर्क (भागीदार बनाउनु) गर्नु हो । जुन सदैव जिवित रहीरहने पृथ्वी वा आकाशलाई समात्न सक्ने साथै साथ तमाम लुकेका कुराहरुलाई जान्न सकिने शक्तिवान छ ।

२ :- देवदुतहरु (मलाइका वा फरिशता) माथि ईमान :-

देवदूतहरु माथि ईमान ल्याउनु ती गोप्य कार्यहरु मध्ये हो जुनलाई अल्लाहले आफनो रसूल हजरत मोहम्मद स.अ.ब. ले बताउनु भएको छ । दूतहरु - फरिश्ता) अल्लाहका सर्व श्रेष्ठ भक्त हुन जुन अल्लाहको आदेशको बिरुद्ध गर्दैनन् र त्यही काम गर्दछन् जसको बारेमा अल्लाहले आदेश दिएको छ ।तिनीलाई अल्लाहले आफनो पूजा गर्नलाई जन्म दिएको छ र उनीहरुलाई केही कार्यगर्नका लागि निर्धारित गरको छ । जसलाई तिनीहरुले पूर्ण गर्छन

।जस्तो कि अल्लाहले उनीहरुको बारेमा बताएको छ र त्यस विश्वासलाई खण्डन गरेको छ । जुन मानिसहरुले अज्ञानताको कारण राख्दछन् कि तिनीहरु अल्लाह सित सिफारिस गर्नेछन र यस विश्वासको खण्डन गरेको छ। कि तिनी अल्लाहकी छोरी हुन् यो कुरा मानिसहरुले आफ्नो मगज् र मन्ले बनाएका छन् ।

जस्तो कि देवदूतहरु को आस्तित्व माथि ईमान ल्याउनु आवश्यक छ यसै प्रकारले यी कुराहरुमाथि पनि ईमान ल्याउनु आवश्यक नै छ। जसलाई अल्लाहले अवगत गराएको छ र उसको रसूलले उसको सम्बन्धमा जानकारी दिएको छ । कि जिब्राईल पनि फरिस्ताहरु मध्येबाट एउटा फरिस्ता हुन् र उनी सबै ईशदूतहरु माथि आकाशवाणी लिएर आउदै रहेका छन् । जसलाई अल्लाहले आफना भक्तहरु तिर पठाएको थियो। केही रक्षक देवदूतहरुले मानिस हरु को कार्यहरुलाई लेखछ्न र तिनीलाई सुरक्षित राख्दछन्। कयामत (प्रलय) को

दिन यो लेखा जोखा (कर्मपत्र,आमालनामा)मानिस समक्ष प्रस्तुत गर्नेछन् । भने त्यो त्यस सम्बन्धमा थाह पाउनेछ र ती मध्ये कुनै कार्यलाई अस्वीकार गर्न सकिने छैन । यदि त्यो इनकार गर्नेछ भने उसका अङ्गहरुले जुनको माध्यमले उसले संसारमा त्यस कामलाई गरेको थियो गवाही दिनेछन् ।

३.पुस्तकहरु (ईश्वरीयग्रन्थहरु) माथि ईमान :- जुन पुस्तकहरुलाई अल्लाहले आफना ईशदुतहरु माथि उतारिएको छ । त्यस माथि ईमान ल्याउनु ईमानका कृत्यहरु मध्ये एउटा कृतय हो ती पुस्तकहरुलाई साँचो जान्नु र यो विश्वास राख्नु कि तिनी अल्लाहको तर्फबाट हुन् आव्श्यक छ ।ती ईश्वरीयग्रन्थहरु माथि ईमान राख्नु दुई प्रकारको हुन्छ ।

१. संक्षिप्त छोटकरीमा (मुज्मल्) ईमान :- ती सबै पुस्तक जसलाई अल्लाहले आफना दूतहरु ( सन्देशवाहक)माथि उतारिएको छ तिनी माथि ईमान

ल्याउनु पर्छ । चाहे हामीलाई उनको नाउँ थाहा होस अथवा न होस ।

२.विस्तृत(तपसील सित ,मुफस्सल)ईमान :- ती सबै पुस्तकहरु माथि ईमान ल्याउनु आवश्यक छ। जसको नाउँ हामीलाई विशेषतः वताईएको छ। जुन पुस्तकहरुको नाउँ कुरआनको माध्यमबाट वताईएको छ । ती चारवटा छन् र पाँचौं पुस्तक कुरआन हो ।

१. कुरआन :- जो कि हामीहरुको हाथमा मौजुद छ । त्यो पुस्तक हजरत मोहम्मद स.अ.ब. माथि उतारिएको छ ।

२. तौरात :- यो पुस्तक हजरत मुसा अ.स.माथि उतारिएको छ ।

३. इंजील :- यो पुस्तक हजरत ईसा अ.स. माथि उतारिएको छ ।

४. ज़बूर यो पुस्तक हजरत दाऊद अ.स. माथि उतारिएको छ ।

५. सुहुफे इब्राहीम :- यो पुस्तक हजरत इब्राहीम अ.स. माथि उतारिएको छ ।

हामीलाई थाहा भइसकेको छ कि उल्लेखित पुस्तकहरु माथि ईमान ल्याउनु आवश्यक छ भने के प्रत्येक त्यस पुस्तकहरु माथि ईमान ल्याउनु आवश्यक छ । जुन कि आज मानिसहरुको हाथमा छ ? के यो त्यही हो जुन कि तिनी इशदूतहरु माथि उतारिएको थियो ? । यो एउटा संक्षिप्त सवाल हो र यसको जवाफ यो हो कि उनी पुस्तकहरु जुन कुरआन भन्दा पूर्व(अगाडि) नै आइसकेका छन् र उनको जुन नमूना अचेल व्यक्ति हरुको हाथमा छ । यो त्यो होइन जुन ईशदूतहरु माथि उतारिएको थियो । तर यसको कारण निम्नलिखित छ ।

१. यिनी पुस्तकहरुको साँचो बोध मौजूद छैन र जुन बाँकी बोध छन् सो उनको अनुवादको रुपमा छन् तथा अनुवाद र सुस्पष्टता गर्नेहरुको बिचार मिली सकेका छन् ।

२. असल पुस्तक त्यस रसूलको युगमा लेखिएको होइन बरु धेरै शताब्दी पछि ती बोधहरु द्वारा लेखिएको छ जसलाई तिनी रसूललाई मान्नेहरुले प्रतिलिपि गरेका थिए । जस्तोकि इन्जीलको हाल छ ।अथवा उसको बोध फेरि नष्ट भइसकेको । फेरि दोश्रो पटक त्यस बोध बाट लेखिएको छ । जसलाई त्यस सन्देशवाहकलाई मान्नेहरुले लेखिएक थिए । जस्तोकि तौरातको हालत भयो ।

३. यी सबै किताबहरु साधारण मानिसहरुको लागि थिएन बरु प्रत्येक पुस्तक मुख्य समुदाय को लागि थियो । किनकि रसूलहरुको आउने किया त्यस पछि पनि समाप्त भएको थिएन । बरु प्रत्येक रसूल आफू पछि आउने रसूललाई सूचना दिन्थे ।

४. ती भाषाहरु जसमा ती पुस्तकहरु उतारिएका थिए तिनमा परिवर्तन आइसकेको थियो । आज उनलाई कसैले पनि बुझ्न सक्दैन । यदि कुनै लेखिएका वस्तु त्यो भाषामा लिखिएको पाइन्छ भनि त्यसवाट यो प्रमाण लिनु साँचो हुन सक्दैन कि यही

नै  असल पुस्तक हो जब कि त्यसमा जुन कुरा छ उसबाट  केहि  पनि  बुझ्न सकिन्न। तर कुरआन आफ्नो  वास्तविक हालतमा छ र सोही किसिम ले शेष  छ  । जस्तो कि हजरत मोहम्मद स.अ.व. को माथि  उतारिएको  थियो  ।  यसको  निम्नलिखित कारण छ ।

१.  अल्लाहले उसको रक्षाको जिम्मेदारी आफै लिनु भएको छ जस्तो कि कुरआनमा आएको छ ।

(انا نحن نزلنا الذكر وانا له لحافظون) الحجر٩

“नि: सन्देह कुरआनलाई मैले उतारेको छु र मैले नै उसको रक्षा गर्छु । ”(१५:९)

२.यो  पुस्तक  नबी  (सन्देशवाहक)को  युगमा  नै लेखिसकेको  थियो  ।  जहिले पनि कुनै पद (श्लोक रआयत)  वा  सूरत  (अध्याय)  अवतरित  हुन्थ्यो रसुलले  लेखनदासलाई  आदेश  दिनु  हुन्थियो कि कुरआनको  त्यस  त्यस ठाउँमा जुन ठाउँमा अहिले त्यो  छ  उसलाई  लेखिदिनुस् । सोही तरिका बाट

हजरत मोहम्मद स.अ.ब. का साथीहरुले त्यसलाई कंठ गरेको र अवतरित हुने कारण र त्यस ठाउँलाई पनि कंठ गरेका थिए र सोलाई विशेष पुस्तकहरुमा लेखिदिए ।

३. हजरत जिब्राईलले प्रत्येक वर्ष नबी स.अ.ब.लाई कुरआन सुनाउनु हुन्थियो र जुन साल वहाँ (हजरत मोहम्मद स.अ.ब.) को मृत्यु भएको थियो त्यस वर्ष तपाईले दुई पटक सुनाउनु भएको थियो ।

४. कुरआनलाई नबीको युगमा र हजरत मोहम्मद स.अ.ब.को पछि पनि मानिसहरुको मुटुमा सुरक्षित गरिदिइयो । अब कुनै पनि मानिस त्यसमा केही पनि परिवर्तन गर्न सक्दैन । यदि लेख्ने बेलामा कुनै परिवर्तन गरिदिए को अवसथामा त्यस लाई कंठगर्नेहरुले त्यस त्रुटिलाई समातन्थे र स्वयं अनुभव गर्थे साथै त्यस्ता भुललाई सुधार गर्थे ।

५. त्यो भाषा जसमा त्यो उतारिएको थियो अहिले सम्म शेष छ र अहिले सम्म त्यसमा कुनै पनि परिवर्तन भएको छैन । कुनै पनि मानिसले जुन यस

भाषालाई राम्रो सित बुझ्दछ त्यसता मानिसले कुरआनको अध्ययन गरे पछि उसको मांग र लक्ष्यलाई त्यसैको शब्दहरुमा बुझ्न सक्दछ ।

६. जुन ब्यक्तिहरु अनुवाद गर्नमा ब्यस्त थिए उनिहरुले आफनो अनुवाद र सुस्पष्टता लाई असल कुरआनको सुरक्षाको लागि कुरआनका पदहरु ( आयत अथवा श्लोकहरु ) बाट भिन्नै गरिदिएको छ । कुरुआनलाई सुरक्षित हुनको सब भन्दा ठुलो प्रमाण यो छ कि यदि तपाई अरब वा अन्य मुलुकहरुको छापाखानामा छापिएको कुरआनका केहि बोधहरुलाई लिएमा तपाई उनी श्लोकहरु लाई एउटै जस्तो पाउनु हुन्छ । अर्का पुस्तकहरुको बिरुद्ध जसको भाषा र बोधहरु चिन्न योग्य छैनन् ।

७. कुरआन अन्तिम पुस्तक हो जुनकी अन्तिम रसूल माथि उतारिएको छ । यसले गर्दा विद्या तथा जुक्ति (उपाय) आग्रह तथा यसको रक्षाको प्रबन्ध गर्नुपऱ्यो ।

यदि यसमा परिवर्तन भएको भएमा मानव समाज बिना कुनै यस्तो पुस्तकको रहन् थियो जसको तर्फ ध्यान गर्न सकुन् । ईश्वरको विद्या र जुक्ति (उपाय) दुईटै को आग्रह थियो कि ईश्वरले आफना प्राणीहरु लाई नष्ट नगरोस् अथवा उनीहरु लाई उनीहरुका इच्छाहरु वा विचारहरु तिर सुम्पिएर उनीहरुलाई अज्ञानता र पथभ्रष्टताको अन्धकारमा भटकनको लागि न छोडी दिओस ।

४- ईशदूतहरु (रसूल वा पैगम्बर ) माथि ईमान :- रसूलहरु माथि ईमान ल्याउनु पनि ईमान का कृत्यहरु मध्ये एउटा कृत्य हो । उनीहरु मध्ये केही माथि ईमान ल्याउनु र केही माथि ईमान न ल्याउनु सांचो र उचित हुन सक्दैन बरु उनी सबै माथि बिस्तार वा विवरणको साथ ईमान ल्याउनु आवश्यक छ । यसले गर्दा प्रत्येक रसूल माथि जसलाई अल्लाहले पठाई बक्सेको छ सो माथि ईमान ल्याउनु आवश्यक छ । हामीलाई उनको नाम थाहा होस् अथवा न होस । तर जसको

नाउँको विवरण गरिसकेकोछ त्यस माथि विस्तार को साथ ईमान ल्याउनु आवश्यक छ। किन कि तिनी एउटा श्रृंखलाको अंश हुन जुन कि एउटा अर्कोबाट गाँसिएका छन्। तिनीहरु मध्येबाट प्रत्येक आफु भन्दा पूर्व रसुलको रिसालत (ईश्दूतत्व)लाई सम्पूर्णता गर्छ। यहाँ सम्मकि अल्लाहले रिसालतको यस श्रृखलालाई हजरत मोहम्मद स.अ.व. माथि समाप्त गऱ्यो । (अल्लाहको कृपा तथा दया होस मुहम्मद सल्लल्लाहु अलेहि वसल्लम तथा सबै रसुलहरु माथि ) यस कुरा को तात्पर्य यो हुन्छ कि जुन ब्यक्ति केहिलाई छोडेर केहि माथि ईमान ल्याउछ भने उ त्यस्तो हुन्छ जस्तो कि उसले सबैलाई अस्वीकार गरेको । किनकि उसले यस श्रृंखलालाई टुक्रा टुक्रा मा पारिदिएको तथा यसबाट लाभ पाउन कठिन छ। कुरआनमा (२५) पच्चीस नबीहरुको (ईश्दूतहरुको) विवरण आएको छ र अरु नबीहरुका नाउँहरुको विवरण गरेको छैन।

(ورسلا قد قصصناهم عليك من قبل ورسلا لم نقصصهم عليك) النساء ١٦٤

केही रसूलहरुका कथाहरु मैले तपाईंलाई सुनाएँ र केही रसूलहरु यस्ता छन्। जुनका कथाहरु मैले तपाईहरुलाई सुनाएको छैन। (४:१६४)

यसले गर्दा रसूलहरुमाथि ईमान ल्याउनु आवश्यक छ किनकि अल्लाहका आदेशहरुलाई उसको बिना जान्नको कुनै साधन छैन। यसैले तिनीहरु अल्लाहकों तर्फबाट सन्देश पुऱ्याउने माध्यम हुन। र उनको बीचमा बिना भेदभावको ईमान ल्याउनु आपेक्षित छ। तर जहाँ सम्म हजरत मोहम्मद स.अ.व. को कुरा छ। त्यो निम्न लिखित कारणले श्रेष्ठ छन्।

(क) उनीहरु म्ध्ये जुन सन्देशवाहक हजरत मोहम्मद स.अ.व. भन्दा पूर्व(अघि) नै बितिसकेका छन्। तिनी विशेषत: आफ्नो घरजाति तथा समुदायको लागि थिए। तथा हजरत मोहम्मद

स.अ.व.को रिसालत(ईश्दूतत्व) समस्त प्राणीहरुको लागि आम छन् । किनकि हजरत मोहम्मद स. अ. व.पछि कुनै पनि ईशदूत आउनेछैन ।

(ख) हजरत मोहम्मद स.अ.व.भन्दा पुर्व नै बितिसकेका रसूलहरुका शिक्षाहरु तथा चमत्कारहरु उनीहरुको साथैमा समाप्त भैसकेको तर हजरत मोहम्मद स.अ.व.को चमत्कार वा शिक्षाहरु शेष छ र शेष रहने छ । तथा हजरत मोहम्मद स.अ.व.को शिक्षाहरु सुरक्षित तथा ती पुस्तकहरुको भित्रमा लेखिएको छ । जुनकि तमाम ब्यक्तिहरुको हातमा घुमिरहेका हुन ।

(ग) हजरत मोहम्मद स.अ.व.ले जुन सन्देश ल्याउनु भएको छ । त्यो तिनी वस्तुहरु मथि आधारित छन जुन हजरत मोहम्मद स.अ.व. भन्दा पहिलाका रसूलहरुले ल्याएका थिए । यसैले सबै रसूलहरुका शिक्षाहरु व रिसालतहरु यस्तो भवन् ( महल) जस्तो छ । जसको निर्माणमा धेरै जस्ता व्यक्तिहरुले भागलिएका हुन् हर एकले एउटा

भागको निर्माण गरेको । यहाँ सम्म कि त्यो सम्पूर्ण भइसकेको तथा हजरत मोहम्मद स.अं.व ले उसको निर्माणलाई परिपूर्ण गर्नु भए ।

(५) कयामत (प्रलय) को दिन माथि ईमान :- प्रलयको दिनमाथि विश्वास राख्नाले निम्न लिखित कुराहरु माथि ईमान ल्याउनु आवश्यक हुनुपर्छ ।

(क) यस संसारका समस्त प्राणी व संसार सहित समाप्ति (सखाप हुनु) माथि ईमान ।

(ख) अल्लाहले प्रत्येक प्राणीलाई जिवित गरेर फेरि उठाउने छ ।

(ग) सबै प्राणीहरुका कर्महरुको लेखा जोखा गरिनेछ जसले राम्रो काम गरेको छ त्यस बाट लाभ उसैलाई हुनेछ र जसले नराम्रो काम गरेको छ भने उसैलाई हानी नोकसानी हुनेछ ।प्रत्येक मानिसलाई उसको कामको परिणाम दिइनेछ ।

(घ) भक्तहरुका (मानिसहरु) कार्यहरुलाई लेखिएर सुरक्षित भै सकेका हुन् । हिसाब किताब (लेखा

जोखा) को मैदानमा (चउरमा) त्यो सबै उनको समक्ष पेश हुनेछन् ।

(ङ) सबै मुसलमानहरु स्वर्गमा प्रवेश गर्नेछन् र सबै नास्तिकहरु (काफिरहरु) नर्क (दोजख) मा प्रवेश गर्ने छन् ।

यस विवरण बाट यो कुरा स्पष्ट हुन्छ कि मृत्यु जीवनको अन्त होइन,बरु त्यो सीमित घटित जीवन र सदैव हुने जीवनको भिन्न गर्ने वस्तु हो । तर के सबै मानिसहरु एउटै किसिमको (खालको) जीवन पाउने छन ? । होइन निःसन्देह तिनी भिन्ना भिन्नै किसिमका हुनेछन् । जसले अल्लाहको अनुशरण गरेको थियो त्यसको लागि राम्रो प्रतिशोध छ र जसले उसको कुरालाई अस्वीकार गरेको छ त्यस्ता लाई ठूलो दण्ड (सजाय) दिइनेछ अरु प्रलय (कयामत) को दिन माथी ईमानको वास्तविक साचो आवश्यकता छ । यस कारण कि जीवनमा मानिसहरु केही कार्य गर्छन् र उसको प्रतिफल् प्राप्त गर्दैनन् तथा न प्रायः उसको परिणाम उनको

समक्ष आउछन् भने के तपाईले सम्झनु हुनु हुन्छ कि यो संसार तथा दृश्यको यसतै अन्त हुन् जानेछ कि अत्याचारीलाई सजाय न मिलोस तथा जस माथि अत्याचार गरिएको छ त्यसलाई न्याय न मिलोस ? यो त कुनै न्यायको कुरा भएन न्याय हुनु आवश्यक छ तर यस जीवनमा होइन अर्को जीवनमा यसको प्रमाणको लागि अल्लाहको रसूल को भनाई तथा सूचना दिनुनै प्रयाप्त छ । प्रलयको दिन माथि ईमानको लक्ष्य यो छ कि राम्रा काम गर्ने व्यक्तिहरुले राम्रो कामको लागि प्रयत्न गरुन् र दुराचारी व्यक्तिहरु पाप वा अपराध बाट टाढा रहुन् । अरु इस ससारमा परीक्षाको लाभ आफ्नो समक्ष आओस ।

६ भाग्य (तकदीर) माथि ईमान :- भाग्य माथि ईमान ल्याउनु पनि ईमानका कृत्यहरु मध्ये एउटा कृत्य नै हो । अल्लाह कुनै पनि कार्य यसको बिना स्वीकार गर्ने छैन । तथापि त्यसले रोजा राखोस अथवा नमाज पढोस र अभियोग गरोस

कि त्यो मुसलमान हो किनकि सत्यतामा त्यो अल्लाह माथि ठीक ईमान ल्याएन अतएव जुन व्यक्ति भाग्य माथि ईमान ल्याउदैन त्यसले अवश्य सम्झनु हुनेछ कि अल्लाह शक्तिशाली छैन र त्यो अज्ञानी छ मजबूर वा असभ्य पूजा को योग्य हुन सक्दैन । किन कि पूजनीय हुनको गुणहरुमा यो छ कि त्यो जिवित रही रहने (चिरञ्जीवी)पालनकर्ता शक्तिशाली,सुनने वाला यी सबै गुण विशेषता वाला होस ।

भाग्य माथि ईमान ल्याउनका केहि श्रेणी हरुछन्

(क) यस कुरामाथि ईमान ल्याउनु कि अल्लाह लाई सबै वस्तुहरुको ज्ञान छ र उसले उनीहरुको जन्म दिनु भन्दा अगाडि नै लेखिदिएको छ ।

(ख) यस कुरा माथि ईमान ल्याउनु कि अल्लाहले जब कुनै वस्तु (थोक)वा कुनै कार्यको निर्माण गर्न चाहन्छ त त्यसलाई भन्छ कि भई जाउ(भइहाल) भने त्यो काम भईजान्छ । जब कुनै थोकलाई उत्पन्न गर्न चाहन्छ त त्यसलाई उत्पन्न गरीदिन्छ

तथा जब कुनै थोकको वजूद (आस्तित्व) लाई रोक्न चाहन्छ त्यस्ता वस्तुहरुले उत्पन्न हुन् सक्दैन ।

(ग) यस कुरामाथि ईमान ल्याउनु कि सृष्टिमा अल्लाह बाहेक प्रत्येक वस्तु अल्लाहले उत्पन्न गरेको छ । चाहे त्यो राम्रो हो अथवा नराम्रो तर त्यस वस्तुलाई बिना कारण उत्पन्न गरेको छैन । आफै त्यसलाई थाहा छ । यसैले उसको उत्पन्न गरेको वस्तु बिना कुनै कारणको हुन् सक्दैन । यसले गर्दा कि उ जान्न बुझ्न र सम्झने वाला तथा उपायक हो ।

(घ) यस कुरा माथि ईमान ल्याउनु कि यस सृष्टिमा कुनै नौलो कुरा उत्पन्न हुँदैन र नत कुनै घटना पनि घटदैन तर जसको वजूद (आस्तित्व) को अल्लाहले निर्णय गरेको छ र उसलाई आदेश दिएको छ किनकि सृष्टि माथि उसैको राज्यहो यसले गर्दा उसको राज्यमा जब सम्म उसले आदेश दिन्न उस बेला सम्म कुनै प्रकारको घटना घटदैन । अथवा त्यो सबै वस्तुहरुलाई रोक्न सक्दछ । जसको

उसले आदेश दिएको छैन । त्यो आफ्ना भक्तहरुको लागि कुफ्रलाई (अल्लाहलाई न मानने धारणा) रुचाउदैन र निर्लज्जता र फोहर तथा नराम्राकुराहरु को आदेश दिदैन । तथा उदण्डतालाई मन्पराउदेन । उसले बिना कुनै कारणको घटित घटनाहरुलाई रोकेको छैन । जसलाई उसले साँचो बुझे सम्झेको छ । यसैले त्यो परीक्षाको विधि विधान सिद्ध हुन्छ । भाग्य माथि ईमान को लाभ यो हुन्छ कि मानिसको कियालाई शक्ति प्रदान गर्छ । किनकि उसलाई यसकुराको विश्वास छ कि मृत्यु र जीवन अल्लाह को हातमा छ । न कि अरुको हातमा छ । किन कि कुनै ब्यक्ति उसको आयु बाट एक मिनट धेरै वा कम गर्न सक्दैन । तथा उसको मृत्यु जतिखेर आउछ त्यस लाई एक छिन पनि रोक्न सक्दैन जस्तो कि कुरआन मा आएको छ ।

(ولكل امة اجل فاذا جآء أجلهم لايستأخرون ساعة

ولايستقدمون )الاعراف ٣٤

"जब उनको मृत्यु आइ पुगोस भने त्यो एकछिन पनि यताउता हुन सक्दैन (७:३४)

भाग्य माथि ईमान राख्नाले मानिसलाई शक्ति प्रदान गर्छ किनकि त्यसलाई यसकुराको ज्ञान हुन्छ जो सबै उसको लागि लेखिसकेको छ। त्यो अवश्य नै पाउनेछ। तथापि सबै जनाले त्यसलाई रोक्नको लागि संगठन् बनाई लेउन् अरु जे उसको लागि लेखिएको छैन उसलाई प्राप्त गर्ने शक्ति त्यसमा हुदैन । यद्यापि सबै मानिसहरु उसको सहायता को लागि एकत्रित (भेला) भै जाउन र त्यसैले उसलाई थाहा छ र त्यसमाथि कर्तब्य छ कि त्यो मात्र हेतु ( कारण) माथि अमल गरोस। रहयो परिणाम को कुरा भने त्यो अल्लाहको हातमा छ। अरु तिनी माथि हामीलाई ईमान ल्याउन आवश्यक छ। त्यस मध्ये केहि कुराहरुलाई हामी आफ्नो चेतना अनुसार थाहा पाउन सक्दैन र उनको हालतको सम्बन्धमा पनि जान्न सक्दैनौ । फेरि उनको सम्वन्धमा हाम्रो के आस्थाहुन सक्दछ ।

लुकिएको कुरा (गुप्त वा परोक्षको कुरा ) माथि ईमान :- लुकिएको कुरा (गुप्त) माथि ईमान राख्नु यस धर्मका सूत्रहरु मध्ये एउटा सूत्र हो र अल्लाहले हामीलाई यस माथि ईमान ल्याउनको शक्ति प्रदान गरेको छ। अल्लाह को ब्यक्तित्व र उसको हालत ( अवस्था) तथा गुणहरुको ज्ञान मानिसले आफ्नो शरीरिक चेतना (ज्ञानेन्द्रिय) बाट गर्न सक्दैन अथवा बुद्धि पनि उनको कल्पना गर्न सक्दैन। तर त्यो अल्लाहको वजुद(आस्तित्व) बाट यस श्रृष्टि तथा यसमा जो कोही छ र उसको प्रयोग को माध्यमहरु लाई हेर्दछ । यस मानिसहरु माथि केहि वस्तुहरु लुकाइएका छन् जसको सच्चाई जान्न सक्दैन। अल्लाहको उपकारहरु मध्ये ठुलो उपकार यो हो कि उसको उनीहरुको मान्न शक्ति प्रदान गरिएको छ। उनी विषयहरु म्ध्ये जुनकि हामीहरुबाट गुप्तछन्। उनी माथि हामी ईमान ल्याउछौं जसलाई सबै स्वीकार गर्छन । तर हामी उसको सच्चाई लाई जान्न सक्दैनौ। एउटा विषय "आत्मा" हो। हामी

लाई उसको आस्तित्व को बारेमा थाहा छ। र यो पनि थाहा छ कि त्यो आउछ र जान्छ तर मानिसलाई लुकिएको रहस्य माथि ईमान छैन भनि मानिस धर्मका धेरै जस्ता सिद्धान्तहरु लाई गुमाई दिन्छ त्यो अल्लाह माथि ईमान, देव दूतहरु (फरिस्ता)मथि ईमान, प्रलय (कयामत) को दिनमाथि ईमान, गुप्त रहस्य हरुमाथि ईमानलाई गुमाई (हराई) दिन्छ।

गुप्त (रहस्य) हरुमाथि ईमानको विशेषताको लागि यो कुरा प्रयाप्त छ कि अल्लाहले उसलाई संयमीहरु का विशेष गुणहरुमा राखेको छ।

(ذلك الكتاب لاريب فيه هدى للمتقين ❖ الذين يؤمنون بالغيب ويقيمون الصلاة ومما رزقناهم ينفقون ) البقرة٢-٣

“यो त्यही पुस्तक हो यसमा कुनै सन्देह छैन संयमीहरु को लागि मार्गदर्शन छ जुन लुकिएका रहस्यहरु माथि ईमान ल्याउन्छन् तथा नमाज

पढछन्  र अरु जो थोक र धन्माल मैले उनीहरु लाई  दिएको छु त्यस मध्ये बाट  खर्च गर्दछन् र दान दिन्छन् (२:२)

यस माथि ईमान ल्याउन्को लागि यो कुरा प्रयाप्त छ  कि अल्लाहले नै तिनी लुकिएका गोप्य वस्तुहरु को सूचना  आफ्नो दूतहरुको मार्फत दिएको छ। यसले  गर्दा त्यस माथि जसले ईमान ल्याउदैन त्यो अल्लाहलाई तथा उसका रसूलहरुलाई झुट्टा ठहऱ्याउने वाला छ।

धर्म तथा इस्लामी धर्मनीति :- ईस्लामी नीति धर्मबाट जोडिएको छ। तथा यसमाथि अमल (कार्य) गर्नु धर्मको कार्यमा अल्लाहको एउटा पूजानै हो। यस कारण कि पूजा अल्लाहको आदेशको आज्ञाको पालन गर्नु तथा उसले (मिनाही) गरेको कुराहरु बाट बाच्नुको नाउँ हो। अरु अल्लाहले हामीलाई आदेश दिएको छ कि हामी यस माथि अमल (कार्य)गरौं। जुन हाम्रो तिर उतारिएको छ।

(اتبعوا مآ انزل اليكم من ربكم ) الاعراف ٣

“तिमीले त्यस कुरालाई अनुशरण गर जुन तिम्रो पालनकर्ता को तर्फ बाट तिमीहरु तिर उतारिए को छ। (७:३)

(وان هذا صراطى مستقيما فاتبعوه ولاتتبعواالسبل

فتفرق بكم عن سبيله ) الانعام ١٥٣

यो मेरो सोझो बाटो हो (अर्थात इसलाम धर्म ) तिमी उसको अनुसरण गर अन्य बाटोमा नजाऊ त्यो तिमीलाई त्यस सोझो बाटो बाट भिन्नै गरिदिनेछ ” (६:१५३)

अल्लाहले आफ्नो पुस्तकमा (कुरआनमा )प्रत्येक वस्तुलाई स्पष्ट गरिदिएको छ जसको मानिसलाई आवश्यकता छ तथा अल्लाह को रसूलले उसको विस्तारका साथमा वर्णन गरिदिएके छ। अरु हजरत मोहम्मद स.अ.व. बाट उसलाई कंठ गरिलिएको तथा त्यसपुस्तकलाई सुरक्षित गरिदिएको जुन कि प्रत्येक युगमा वा प्रत्येक ठाउँमा मानिसहरुको हातमा घुमिरहेको छ।

मानिसहरुलाई याद दिलाउन को लागि इस्लामी उपायहरुको साराँश :-

(१) धर्म :- अल्लाहले धर्मलाई सहीराख्न तथा परिर्वतन र आयोग्य को माध्यमवाट शुरक्षित गर्नको लागि रसूलहरुलाई पठाएको र पुस्तकहरुलाई(धर्म ग्रन्थ) उतारिएको तथा अल्लाह को बाटोमा लडाई (जिहाद) को यिनी (रुकावट) अवरोध लाई हटाउन् को लागि नियुक्त गरेको जुन मानिस हरु लई ठीक (साँचो) दृष्टिकोण वाट रोकिदिन्छ तथा तिनीहरुलाई पथभ्रष्ट (गुमराह) गरिदिन्छ तथा अल्लाह बाहेक अरुको भक्त बनाई दिन्छन् ।

२. बुद्धि :- त्यो वस्तु जुन कि मानिसको बुद्धि माथि पर्दा हालदिन्छ अथवा उसलाई कुराकानी र काम काज बाट रोकि दिन्छ अथवा उसलाई गुमराह पथभ्रष्ट गरिदिन्छ । इस्लामले यसको प्रयोग बाट मिनाही गरेको छ । चाँहि त्यो खाने कुरा हो अथवा पिउने कुरा हो ती सबै हराम (अवैध) छ ।

(ياايهاالذين ءامنوا انماالخمر والميسر والانصاب والازلام رجس من عمل الشيطان فاجتنبوه لعلكم تفلحون ) المائده ٩٠

" रक्सी तथा जुआ भेंट बलिदान(जुनदेवी देवता लाई चढाउनछन) अरु शकुन को तीर (काँड) सबै अपवित्र वस्तु हुन् " (५: ९०)

३. प्राणको रक्षा :- त्यो प्रत्येक वस्तु जुनमानिस को जीवनलाई हानि पुऱ्याओस इस्लामले त्यसलाई हराम(अवेध र अनुचित गरिदिएको छ। यसैले कुनै मानिसको लागि उचित छैन। कि त्यो आत्महत्या वा शरीरको (जिउ)हानि गरेर आफुमाथि अत्याचार गरोस । यस्तै अरुहरु माथि पनि अत्याचार गर्नु उचित छैन। यसैले कुनै अर्काको हत्या गर्नु अथवा यस्तो वस्तुलाई प्रयोगका लागि दिनु जुन मानिसको शरीर (जिउ) लाई निर्बल गरिदिन्छ त्यो अनुचित छ । यसैले हत्यामा यस्तो नियम बनाएको छ। जुन वदलान्छि अर्थात"प्रतिकारको नियम" जुनकि अरुहरु

को प्राणको रक्षाको लागि छ। एउटा हत्याराको हत्या गर्नु त्यस माथि दयागर्नु भन्दा हत्या गर्नु नै उचित छ । अरु त्यसलाई स्वतन्त्र छोडिदिनु जन्साधारणको लागि हत्याको मार्ग खुल्लाछोडे जस्तो छ। आखिर किन एउटा हत्यारा माथि दया गर्नु तथा जस माथि अत्याचार भएको छ त्यस माथि दया न गर्नु।

४. सम्पत्ति :- जागीर (नोकरी) खोज्नु तथा धन् कमाउनु एउटा धार्मिक लक्ष्य हो,यसै प्रकार यसको रक्षा पनि गर्नु पर्दछ यसैले कसैको लागि उचित छैन कि धन यस्त वस्तुहरुमा ब्यर्थ गरोस अथवा खेर फालोस जुन उसको लागि उचित छैन। यहाँ सम्म कि खान पिन्को उचित थोकहरुमा पनि इस्लाम धेरै खर्च गर्नको लागि मिनाहि गर्छ। जस्तो कि कुरआनमा आएको छ।

(وكلوا واشربوا ولاتسرفوا) الاعراف ٣١

"खानु पिउनु अरु अपरमित (धेरै तथा ब्यर्थमा ) खर्च नगर (७:३७)

जबकि मानिसले आफ्नो धनलाई नष्ट गर्नु ठीक र उचित छैन भने अर्काको धनमाल हडप् गर्नु अरु पनि उचित छैन । कसैको धन्माल उसको आदेशको बिना लिनु उचित छैन । यस्तै धनमाल लाई संग्रह (जम्मा) गर्नु पनि मिनाही छ । यसैले सम्पत्ति को रक्षाको लागि चोरको हातलाई काटन् को दण्ड (सजाय) तथा ब्याजलाई (ऋणलाई) हराम (अवैध)हुनको आदेश नियुक्त गरिएको छ ।

५. आदर तथा मान वा मर्यादा :- इस्लाम आदर तथा मानम र्यादा को रक्षा चाहन्छ । कसै लाई यो उचित छैन कि अर्कालाई आफ्नो मानमर्यादा माथि आक्रमण गर्नको अवसर देओस । यसै प्रकार उसलाई अर्काको मर्यादालाई भङ्ग गर्नु पनि उचित छैन । मानिस लाई मानमर्यादा र उसको आदर र मूल्यको रक्षाको धेरै इच्छा हुन्छ । यसै कारणले इस्लामले यस्तो मानिसको लागी जो उस को

आदरतालाई नष्टगर्छ एउटा हद(दण्ड)को माध्यमले मान मर्यादाको रक्षा गरेको छ । यस विधिको अस्पष्टता पछि जुन इस्लामी धर्म नीतिले मान मर्यादा को रक्षाको लागि नियुक्त गरेको छ। अब आवश्यकता यो छ कि इस्लामी धर्म नीति का ती साधनहरुलाई थाहा गरौं जस बाट यिनी नियमहरु लाई लिन्छौं ।

इस्लामी धर्म नीतिका साधन निम्न लिखित छन् :- कुरआन तथा सुन्नत (अल्लाहको रसूल हजरत मोहम्मद स.ख.व को उपदेश जो कुरआनको वर्णन हो ) मात्र यही दुबैले नै इस्लामी धर्म नीतिका साधन् हुन् । यदि कुनै मानिस इस्लामी धर्मका यी दुइवटा साधन्लाई छाडेर अर्को साधन्लाई पत्याउँछ भने यस्तो मानिस पथभ्रष्ट हुनेछ। यस बारेमा अल्लाहको भनाई छ ।

(ياايها الذين آمنوا اطيعوا الله واطيعوا الرسول وأولى

الامر منكم فان تنازعتم فى شيئ فردوه الى الله

والرسول ان كنتم تومنون بالله واليوم الآخر ذلك

خير وأحسن تأويلا) النساء ٥٩

हे आस्थावान मानिसहरु तिमीहरु अल्लाहको अनुसरण गर तथा रसूल (सन्देशवाहक मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम ) को अनुसरण गर र तिम्रा अधिकारीहरुको पनि अनुसरण गर । फेरि यदि तिमीहरुको बीच कुनै कुराको बारेमा खिचोला उत्पन्न होस भने त्यसलाई अल्लाह तथा उसको रसूल तिर फर्काई देऊ । (अर्थात त्यस खिचोला को समाधान कुरआन तथा हदीसमा खोजनु )यदि तिमीहरु अल्लाह तथा प्रलयको दिन माथि ईमान राख्दछौ (भने यस्तै गर )यही राम्रो तरीका हो तथा यस्तै गर्नु पिरिणाम को आधारले पनि राम्रो छ ।

रसूल्लाह सल्लल्लाहु अलैहि वसल्लम को भनाई छ

(تركت فيكم امرين لن تضلوا ماتمسكتم بهما

كتاب الله وسنتي )

मानिसहरु हो ! मैले तिमीहरुका लागि दुइवटा कुराहरु छाडेर जाँदैछु । जब सम्म तिमीहरुले यी दुबै थोकहरुलाई बलियो सित समाति राख्नु हुनेछौ तिमीहरुले कहिले पनि पथभ्रष्ट हुन् सक्दैनौ । पहिलो कुरा अल्लाहको किताब (कुरआन)हो । दोस्रो थोक मेरो सुन्नत (रसूलुल्लाह सल्लल्लाहु अलेहि वसल्लमको आदेश, उपदेश, समर्थन तथा जीवन पद्धति) हो ।

जिहाद (अर्थात अल्लाहको धर्म इस्लामको प्रचार प्रसारमा अडकाउ पार्ने मानिस वा समुदाय सित सङ्घर्ष गर्नु ) :- इस्लामको रक्षागर्न वा उसलाई सबै सम्म पुऱ्याउने र उसको बिरुद्धहुनेहरु लाई हटाउन् को लागि अल्लाहले जिहादको नियम नियुक्त गरेको छ । यसले गर्दा मानवतालाई उनको सेवक बुझ्नेहरुको कैदबाट स्वतन्त्र गराउनु पऱ्यो र सबै मानिसहरुलाई जस्तै भक्तहरु, नेताहरु, साधुहरु,

मुनिहरु, ऋषीहरु, कब्र तथा चिहानहरु, रुखहरु, ढुङ्गाहरु, मुर्तिहरु आदि को पूजा बाट जसको ज्ञानहीन भएका मानिसहरुले पूजागर्छन् सो बाट त्यसलाई मुक्ति दिलाउने र जसले साँचो धर्म लाई लुकाई राखेका थिए र अन्धकारको जीवन बिताई राखेका थिए त्यस्तालाई अल्लाहको तर्फ ल्याउनु पऱ्यो र जिहादले सबै मानिसहरुलाई मानिस तथा अरु कुनै थोकका पूजा बाट मुक्ति दिलाएर मात्र अल्लाह को पूजा को तर्फ संकीर्ण जगत बाट जीवन तथा मृत्यु पछिका विलाशताहरु वा सुख भोगहरुको तर्फ ल्याउन को लागि नियुक्त गरिएको छ । इस्लामका यिनी मौलिक सिद्धान्त तथा आधारहरु को अस्पष्टता पछि हामी बुझ्न सक्छौं कि उसमाथि अमल (कार्य) गर्नु ब्यक्ति वा समाज दुबैलाई आवश्यक छ ।

मानिसहरुको अधिकार :- समाजका प्रत्येक व्यक्ति माथि केही अधिकार छ र केहि दायित्वहरु पनि छन् र ती छोटकरीमा चार प्रकार का छन् ।

(१)अल्लाहको अधिकार(२)स्वाधिकार (३) मानिसहरु को अधिकार ।

(४) उनी वस्तुहरुको अधिकार जुन यस संसारमा उसको अधीनमा छन् । जसवाट सेवालिनु र लाभ पाउन ठीक र उचित छ ।

प्रत्येक साँचो तथा राम्रो मुसलमान को कर्तब्य छ कि तिनी चारै वटा अधिकार को बारेमा जानकारी प्राप्त गरोस र तिन्लाई सत्यमन, र श्रद्धा एवम पूर्ण विश्वासको साथ पूर्ण गरोस । इस्लाम को धर्म नीतिले ती मध्ये बाट प्रत्येकलाई भिन्न भिन्नै वर्णन गरेको छ र उनलाई कस्तो रुपले पूर्ण गर्नुछ त्यसलाई अस्पष्ट गरिदिएको छ । अरु त्यसको लागि नियम नियुक्त गरिदिएको छ । जुनकि मानिसलाई पूर्णगर्नमा उनको सहायता गर्छन् । यसप्रकारले उनीहरु मध्ये कुनै पनि अधिकार जहाँ सम्म होस बेकार (ब्यर्थ तथा खेर ) नजाओस ।

१. अल्लाहको अधिकार :- अल्लाह का अधिकारहरु मध्येबाट पहिलो अधिकार त्यसमाथि ईमान ल्याउनु

र मात्र उसैको पूजा गर्नु नै छ। अरु कुनै अर्कालाई भगवान (अल्लाह) वा पालनहार न बनाऊ र त्यस अधिकार लाई वाक्य वा मूल मन्त्र “लाइलाहा इल्लल्लाह”माथि ईमान ल्याएर उसलाई पूर्ण गरौं जस्तो कि यस भन्दा पहिला नै मैले स्पष्ट गरिसकेको छु।

अल्लाहका अधिकारहरु मध्ये दोश्रो अधिकार यो हो कि त्यस अधिकार तथा आदेश वा आज्ञालाई जुन अल्लाहको पास देखि आएको छ र हजरत मोहम्मद स.अ.व. को कुरा तथा भनाई लाई मान्नु र उसमाथी पूर्ण विश्वास गर्नु। अरु हजरत मोहम्मद स.अ.व.ले अल्लाहको दूतहुन्को गवाही दिनु को यही नै तात्पर्य हो। जसलाई पहिलानै मैले बताई सकेको छु।

अल्लाहका अधिकारहरु मध्ये तेश्रो अधिकार यो हो कि उसको अनुसरण (ताबेदारी) गर्नु पर्छ र यो अधिकार त्यस नियमको पालन द्वारा गर्नुस जसलाई अल्लाह को पवित्र पुस्तक (कुरआन) ले वर्णन

गरेको र हजरत मुहम्मद स.अ.व.ले उसलाई अस्पस्ट गर्नु भएको छ। जसलाई मैले यस भन्दा पहिला नै बताइसकेको छु।

अल्लाहका अधिकारहरु मध्ये चौथो अधिकार यो हो कि मानिसहरु मथि जुन कर्तव्यहरु तथा दायित्वहरु लाई संचालन (लागु) गरिएको छ। उनको पूर्ति गर्नु जसको यो भन्दा पहिला वर्णन भइसकेको छ र यो अधिकार अरु अकिार भन्दा धेरै नै विशेष छ। आवश्यक छ कि उसको पूर्तिगर्न को लागी स्वयं आफ्नो वा अरुहरुको अधिकार को बलिदान दिनु। जस्तो कि मानिसले जब नमाज तथा रोजा लाई पूर्ण गर्नको निश्चय गर्दछ भने नफस् (इच्छा तथा आत्मा) का धेरै जस्ता अधिकारहरु लाई बलिदान गरिदिन्छ। बिहानै तथा सखारैं उठछ ,चीसो पानीले वुजू गर्छ र आफ्ना धेरै जरुरी कार्य वा क्रियाहरु को रातदिन्मा धेरै पटक नमाज पढन को लागि छाडी दिन्छ। अरु बर्त बस्ने उद्देश्यले खाना पानी लाई छोडी दिन्छ । सम्पूर्ण महिना भरि आफ्ना

इन्द्रीयहरुलाई दबाएर राख्दछ र जकात दिनको लागि धन सम्पत्तिको प्रेम माथि अल्लाह को प्रेम लाई सर्वोपरि राख्दछ । हजको लागि यात्राका कठिनाईहरु तथा परिश्रमहरु लाई सहन् गर्दै धेरै धनहरु खर्च गर्छ र जिहादमा तन,(जिउ) मन् , धन् लाई बलिदान गर्छ । यसै प्रकार अल्लाहका अधिकार हरु लाई पूरा गर्नको लागि अरुहरुको अधिकारलाई कम वा अधिक बलिदान गरिदिन्छ । जस्तो कि नमाज पढनको लागि सेवक (दास) ले आफ्नो स्वामीको सेवामा केही कमी गरी दिन्छ । तर आफ्नो पालनहार अल्लाहको पूजा गरोस र उसको अधिकारलाई जुन उसमाथि आवश्यक छ पूर्णगरोस । हजको लागि आफ्नो रोजी तथा ब्यापारलाई छाडि दिन्छ । तथा आफ्नो श्रीमती (स्वास्नी) छोरा छोरीहरुलाई छोडेर अल्लाहको घर तिर यात्रा गर्छ निःसन्देह जुन धेरै जस्ता अधिकारहरु लाई प्रभावित गर्दछ । जिहादमा एउटा मानिस अर्कोलाई हत्या गरिदिन्छ । त्यो मात्र अल्लाहलाई खुश पार्नको लागि

गर्छ । यसै प्रकार मानिसले अल्लाहका अधिकारहरु लाई पूरा गर्नको लागि धेरै जस्ता वस्तुहरु लाई बलिदान गर्छ ।जुन उसको आधीनमा हुन्छन् जुनलाई त्यो प्रयोग गर्दछ । जस्तो कि पशुहरु बलिदान गर्छ र धन खर्च गर्छ ।

अल्लाहले आफ्न अधिकारहरुको लागि पनि सीमा र्निधारित गरेको छ किनकि उसलाई मान्नेहरु माथि आवश्यकता भन्दा बढता बोझ (भारी) नपरोस । जस्तो कि नमाजमालाई नै हेर्नुस् नमाज पढनले अल्लाहले कष्ट वा परेशानी गर्नको निश्चय गरेको छैन । बरु त्यसमा सजिलोपना चाहेको छ । यदि कारण बस् पानी छैन वा तपाई रोगी हुनुहुन्छ भने पानीको सट्टामा चोखो माटो माथि दुबै हात लाई फेरेर आफ्ना हात तथा मुख् माथि फेरी लेनुस् जसलाई "तयम्मुम्" भनिन्छ । यदि तपाई यात्रा गरिरहनु भएको छ भनि तपाई बसेर अथवा सुतेर पनि नमाज पढन सक्नुहुन्छ । आफ्नो नमाजमा जुन कुरआनलाई तपाईले पढनु हुन्छ त्यो

एत्रो थोरै हुन्छ कि त्यसमा अधिक समय लाग्दैन । इस्लामको नीतिको भनाई छ । कि यदि तपाई खुशी वा शान्ति अवस्थामा हुनुहुन्छ भनि ज्यति चाहनु हुन्छ त्यति कुरआन पढ । जस्तो ठूला ठूला सूरह ( अध्याय) सूरह बका सूरह आलेइम्रान सूरह निसा आदि । तर यदि तपाई नमाज पढाउने मानिस ( इमाम) हुनुहुन्छ भनि आफ्नो नमाज लाई लामो पार्नु राम्रो छैन किनकि तपाईको पछाडी यस्ता मानिसहरु हुने छन् जुन सानो खालको नमाज पढन् चाहन्छन् । फेरि यो कुरा अल्लाहले रुचाउछ कि जुन नमाज उसले अनिवार्य गरेको छ (फर्ज) । त्यस बाहेक पनि पढोस् (नफिल्) र उसको निकट हुन्लाई प्रयास पनि गरोस । तर त्यो कहिले पनि यो चाहदैन कि आफ्नो सुख चैन लाई बर्बाद गरि दिओस । र रोजी रोजगार ,ब्यापारको समयलाई पूजा गर्नमा बिताईदिओस वा आफ्नो जीवनको सम्पूर्ण विषयहरुवाट भिन्न भएर मात्र नमाज नै पढदै रहोस । अरु अल्लाहका भक्तहरु को जुन

अधिकार तिमी माथि नियुक्त छन् उनको कुनै ध्यान नगरोस । यसै प्रकार रोजा (ब्रत बस्नु) बर्तमा पनि अल्लाहले धेरै सुविधाहरु राखेको छ । उसले रोजालाई बर्ष भरिमा मात्र एक महिनाको लागि निर्धारित गरेको छ । रोगी भएमा वा यात्रा गर्ने अवस्थामा रोजा छुटन गएमा रोजा अर्को महिनामा राख्न सकिने छ अरु रोजाको लागि जुनबेला निर्धारित गरिएको छ । उसबाट एकछिन् पनि धेरै गर्न राम्रो छैन । रोजा राख्नेहरुलाई त्यसबखत सम्म खानु पिउनु उचित छैन जब सम्म सूर्यास्त न होस् । त्यस पछि तुरुन्तै जल्पान गरिलिनु पर्छ । फेरि अल्लाहले रमजानको महिनामा रोजाहरु बाहेक पनि रोजा राख्ने हरुलाई मनपराउछ । तर त्यो कुरा मन पराउदैन एउटै साथमा(लगातार) रोजा राखोस् र आफ्नो जिउलाई कष्ट पुऱ्याओस तथा आफ्ना कार्यहरुलाई छोडेर घरमा बसि रहोस् ।

यसै प्रकार सम्पत्तिको जकात (धर्मादाय) को मात्रा लाई पनि थोरै राखेको छ । त्यसलाई धनवानहरु

माथि नियुक्त गरेको छ। जुनकि निर्धारित मात्रा भन्दा अधिक धन् राख्दछन्। यदि कुनै मानिस त्यस भन्दा बढती धन् आफ्नो खुशीले दानगरोस भने अल्लाहले आफ्ना भक्तहरुको यस कार्य बाट मनपराउछ । तर त्यो आफना भक्तहरु बाट यो चाहन्न कि आफ्नो प्राण तथा घरमा वस्ने रहने अरु सदस्यहरुको अधिकारलाई बलिदान गरि दिओस र आफ्ना समस्त श्री सम्पत्तिलाई दान गरिदिओस तथा अरु मानिसहरुको बीच हताश वा असहाय रहिजाओस । बरु यस विषयमा तपाई मध्य बाटो अपनाउनु होस्।

फेरि हज माथि बिचार गर यस विषयमा सबैलाई थाहा छ कि अल्लाहले यसलाई मात्र उनीहरुको लागि राखिएको छ जुन यात्रा गर्न (खर्चगर्न) को शक्ति राख्दछन अरु जुन बाटोमा कठिनाईहरु वा कष्टहरुलाई सहने योग्य हुन्छन् र अल्लाहले त्यसमा अरु पनि सुविधा राखेको छ। अल्लाहले मानिसलाई आफ्नो सम्पूर्ण जीवनमा एकपटक हज गर्नु

अनिवार्य गरेको छ । यदि त्यो बाटो को डर त्रास वा खर्च को लागि धन छैन भने प्रतीक्षा गरोस् । त्यस योग्य न हुन्जेल सम्म । यसै प्रकार यो पनि आवश्यक छ कि त्यो हजको लागि आमा बाबु को स्वीकृती प्राप्त गरोस् । किनकि त्यस्तो भएकोले उसको बुढो आमा बाबुलाई कष्ट दुख उठाउनु नपरोस । यिनी सबै अधिकार लाई अस्पष्ट हुन्छ कि अल्लाहले आफ्ना अधिकारहरु को तुलनामा आफ्ना भक्तहरु को अधिारलाई ध्यानमा राखेको छ । आफ्नो अधिकारको सबभन्दा ठुलो बलिदान मानिसले जिहादमा दिन्छ । यसलेगर्दा कि मानिसले जिहादमा आफ्नो प्राण तथा धन् सम्पत्ति लाई अल्लाहको प्रसन्नता (खुसी) को लागि तथा अल्लाह को नाउँलाई माथि गर्नको लागि बलिदान गर्छ र यी सबै त्यो उसको प्रसन्नता प्राप्त गर्नको लागि उसको बाटोमा खर्च गर्छ ।

अल्लाहले आदेश दिएको छ कि अपाहिज (अङ्ग भङ्ग भएका मानिसहरु महिला, नानीहरु, घाइतेहरु माथि

अत्याचार नगरुन । असत्यवादीहरु मध्येबाट मात्र उनीहरु संग युद्ध गरुन जुनले तिमी संग युद्ध गर्छन । अरु शत्रुको भूमिमा बिना कुनै कारणले तथा बिना आवश्यकताको हुहल्ला न गरुन । अल्लाह उनी माथि यो कुरा लागुगर्छ कि शत्रुहरुको बीचमा पनि न्याय गरुन । यदि उनका नगरहरुलाई विजय गरेर उनलाई आफ्नो अधिनमा गरेकोमा जो पनि उनीबाट सम्झैता भएको हो सो लाई पूर्णगर । र उनी असत्यवादीहरु माथि जोरजुल्म(अत्याचार) गर्नको इजाजत छैन । सत्यबाट शत्रुता र असत्य को सहायता नगरोस । र आफ्नो हातलाई आफ्नो बसमा राखोस् ।

२. स्वाधिकार :- अब तपाईले मानिसहरुका अधिकारहरु मध्ये बाट दोश्रो किसिमको अधिकार लेऊ जुन उसको जीवनको बारेमा छ किनकि त्यो आफै आफू माथि उसबाट बढेर अत्याचार गर्छ । यसलेगर्दा प्रत्येक मानिसले अनुभव गर्छ र विचार गर्छ उसको जीवन अरुहरु को जीवन भन्दा अधिक

प्यारो छ र कुनै मानिसले यो स्वीकार गर्ने छैन कि त्यो आँफै नै आफ्नो जीवनको शत्रु हो तर तपाईले यस विषय माथि अलिकति ध्यान गर्नुस भने सत्यता स्पष्ट भैजान्छ।

मानिसको सबभन्दा ठूलो विवशता जसमा कि मानिसको जन्म भएको छ त्यो जब कुनै इच्छाको अधीनमा आइजान्छ । भने त्यो सम्पूर्ण तरिकाले उसको दास (सेवक)बनि जान्छ र त्यसबाट हानिको चिन्ता गर्दैन। जुन उसैको कारणले स्वयं उसैलाई पुऱ्याउछ । चाहिँ त्यो उसको अनुभव गरोस वा न गरोस।

अरु तिमीले कुनै नसाको बुराईमा फसिएको व्यक्ति लाई हेर्नु भयो भनि त्यो उसको लागि अन्धो भइजान्छ र उसको लागि यस्तो हानिलाई स्वीकार गरिलिन्छ । जुन उसको स्वास्थय उसको धन् वा मान (इज्जत) लाई बर्बाद गर्ने हुनेछन। अरुकुनै यस्तो ब्यक्तिलाई हेर जुनकि आफ्नो वासना को दास हो भनि र त्यो यस्तो कार्य गर्दछ जुन उसको

मृत्युको कारण बन्नजान्छ । अरु यस्तो मानिस लाई हेर जसलाई आफ्नो आत्माको मुक्तिको इच्छा हुन्छ भने त्यो आफ्नो आत्मालाई पवित्र बनाउन्को लागि र उसको उन्नतिको लागि सम्पूर्ण संसार बाट छुट्टै हुन्जान्छ अरु आफ्नो जीवनको साथ शत्रुताको ब्योहार गर्छ र आँफै आफ्नो दुश्मन बन्न पुग्छ । अरु त्यो चाहन्छ कि प्रत्येक स्वादका इच्छाहरुलाई नियन्त्रणमा गरोस जुन उसले हेरिएको छ र आफ्नो आवश्यकताको पूर्णगर्नाले वा बिवाह गर्नाले अरु जलपान तथा लुगा कपडा लगाउनाले आफू लाई रोक्छ । अरु उसलाई रुचाउदैन । यहाँ सम्म कि यस संसारमा जुन त्यसको दृश्यमा छ साँस लिनु पनि उचित बुझ्दैन । यसैले त्यो जङ्गलहरुमा शरण लिन्छ अरु उसले यही नै सम्झेको हुन्छ कि यो संसार उसको लागि बनाइएको छैन । यस संसारमा मानिसहरुको दृढता तथा कठोर्ता वा पथभ्रष्टताका केहि उदाहरणहरु छन् अरु यस्ता कयौं प्रकारका दृश्यहरु सामुने आउन्छन् । जुनलाई

हामीले बिहान–बेलुकी हेरछौं । किनकि इस्लामी धर्म नीतिले उसको भलाई (कल्याण) र लाभ चाहन्छ । यसैले त्यो एउटा उचित वास्तिविकता माथि सावधान गर्छ ।

(وان لنفسك عليك حقا ) صحيح البخاري

“ **निसन्देह तिम्रो प्राणको तिमी माथि अधिकार छ** । ” -हदीस बुखारी )

इस्लामी धर्म नीतिले प्रत्येक त्यस कुराबाट जुन उसको लागि हानिकारक छ जस्तै रक्सी, गाजा आदि नसा दिनेकुराहरु मृतक पशुहरु (जसलाई इस्लामी विधि अनुसार काटिएको छैन) रगत् ,सुङ्गुर तथा बङ्गुरको मास, मासाहारी पशु हिंसक ( घातक )तथा अपवित्र जनावरहरुको मासुवाट पनि रोक्छ । किनकि यी वस्तुहरुको प्रयोगले मानिसको स्वास्थ्य तथा उसको रहन्सहन् वा उसको बुद्धि तथा आत्मा माथि नराम्रो प्रभाव हुन्छ । धर्म नीतिले लाभदायक तथा पवित्र वस्तुलाई हलाल (वैध र उचित )भन्छ

र मानिसलाई भन्छ । आफ्नो जिउ र आफ्नो जीवनलाई उनी कुराहरुको प्रयोग बाट वञ्चित नगरुन किनकि तिम्रो शरीर माथि पनि अधिकार छ र मानिसलाई नाङ्गो रहनबाट मनाही गर्छ । अरु उसलाई आदेश (हुक्म) दिन्छ कि त्यो त्यस सुविधा बाट लाभ पाओस जुनकि अल्लाहले उसको लागि राखेको छ । अरु उसको लागि आवश्यक छ कि त्यो त्यस शरीरिक अङ्गहरुलाई लुकाएको हुनुपर्छ । जसलाई खुल्ला राख्नु बेशर्मी (लज्जा) मा गिन्ती हुन्छ । र त्यो त्यसलाई आदेश दिन्छ । धन कमाउन को लागि प्रयास गरोस अरु आदेश दिन्छ कि ब्यर्थमा घुमफिर न गरोस अरुहरु समक्ष सहायता को लागि हात नपसाओस । आफूलाई भोको न राखोस । उनी शक्तिहरुलाई कार्यमा लाउनु पऱ्यो जुन अल्लाहले तिमीलाई प्रदान गरेको छ । धर्मनीति अनुसार सत्य साधनहरुद्वारा उनी प्रयोजनाहरुको सहायता लिएर जुनलाई अल्लाहले धर्ती वा आकाश मा तिम्रो प्रसन्नता, पालन–पोषण तथा सुविधाको

लागि पैदागरेको छ। आफ्नो जिविका आर्जन को लागि प्रयत्न गरोस । अरु त्यो यसकुराको आज्ञा दिदैन कि मानिसले आफ्ना इन्द्रियहरु तथा आत्माका इच्छाहरुलाई दबाओस । बरु त्यसलाई आफ्ना इनद्रीयहरुका इच्छाहरुलाई पूर्ण गर्नको लागि बिहे गर्नको आदेश दिन्छ र भन्छ यदि तिमी आत्माको उन्नति र अल्लाह को निकट हुन चाहन्छौ, प्रलयमा सफलता चाहन्छौ भनि दुनिया लाई छाडीदिन को कुनै आवश्यकता छैन। यसले गर्दा कि यस संसारमा उसको उपहार बाट लाभ उठाउदै अरु अल्लाहको आदेश को उलङ्घन बाट बाच्दै र उसको नियम र धर्म निति को पालन गर्दै अल्लाहको पूजा गर्नु नै संसारमा तथा मरिसके पछि सफलता र भलाईको सब भन्दा ठूलो सफल साधन हो। धर्मनीतिले उसमाथि आत्महत्यालाई हराम गर्छ र उसलाई भन्छ कि यो जीवन जो तिमीलाई दिइएको छ अल्लाहले तिम्रो पासमा (धरोहर) को रुपमा दिएको छ । किनकि त्यसबाट निर्धारित

समय सम्म सेवा लिनस् । यसले गर्दा दिइएको छैन कि उसलाई नष्ट पारोस् अरु आफ्नो हातबाट उसलाई बर्बाद गरोस् ।

३. **मानिसहरुको अधिकार (हक) :-** इस्लामी धर्म नीतिले एकातिर उसलाई आफ्नो ब्यक्तिगत तथा आफ्नो शरीरका अधिकारहरुलाई पूर्ण गर्नको लागि आदेश दिएको छ। त्यहीं उसलाई अर्कोतिर यो पनि आदेश दिएको छ कि यिनी अधिकारहरुलाई यस प्रकारबाट पूर्ति नगरुन । कि यस संसारमा अल्लाह का अरु भक्तहरुको अधिकार माथि प्रभाव परोस् । यसलेगर्दा त्यो आफ्ना इच्छाहरु तथा मनोकामना हरु लाई यस प्रकार बाट पूर्ण गर्ने छ। भने आँफै यसको आत्मा अपवित्र हुन जान्छ र अरुहरुलाई कष्ट पुग्छ । यसैले धर्म नीतिले लुटमार, चोरी, बेइमानी, धोखा दिनु, प्रतिज्ञा तोडनु,बचन भङ्ग गर्नु, ब्याज (ऋण) लिनु वा घुसलिनु आदिलाई हराम( अवैध) भनेको छ। किनकि मानिसले यिनी तरिका हरु बाट जुनलाभ प्राप्त गर्छ त्यो अरुहरुलाई हानि

गरेर, दोषी ठहराएर ,अरुलाई कलंकित गरेर प्राप्त गर्छ र यी सबै वस्तुहरु अल्लाहका अरु भक्तहरुलाई कष्ट पुऱ्याउने साधन हुन्छन् र यसै प्रकार जुआ र सट्टालाई हराम (अवैध) गरिदिएको छ। किनकि यिनी अवस्थामा उसलाई जुनलाभ हुन्छ सो धेरै मानिस हरुलाई हानि पनि पुऱ्याउछ। यसै प्रकार उसमाथि बेइमानी धोखाधडी आदि किसिमहरुलाई अर्का धनहरुका विषयहरुलाई हराम गरिदिएकोछ। जसमा यो कुराको डर (त्रास) रहन्छ कि कुनै एउटाको हानि पुगोस । अरु यसै प्रकारले हत्या तथा आतंक फिजाउनु, दंगा फसाद, उदण्डता गुण्डागर्दी गर्नलाई हराम गरिएको छ किनकि कुनै पनि मनिसको लागि यो उचित छैन ।कि कसैको धन सम्पत्तिलाई दबाव बाट प्राप्त गर्न वा आफ्नो इन्द्रियहरुको इच्छालाई पूर्ति गर्न को लागि कसैको हत्या गरेस अथवा कसैलाई कुनै प्रकार को कष्ट पुऱ्याओस् । यसै प्रकारले उसमाथि बलात्कार जस्तै दुष्कर्मलाई हराम गरिएको छ । किनकि यी सबै

दुष्कर्महरुले एकातिर उसको स्वास्थ्य र चालचलन लाई बर्बाद गरिदिन्छ। अरु अर्कातिर समाजमा कुनै नियमरहदैन । तथा निर्लज्जता फिजने कारण बन्न जान्छ । उसको परिणाम यो हुन्छ कि समाजमा सरुवा रोगहरु (एडस) जन्म लिन्छन् धेरै जस्ता वंशहरु (खानदान) बर्बाद हुन् जान्छन्। मानवताका सम्बन्धहरुमा टुट्फुट् हुनजान्छ र समाज तथा सांस्कृतिको जग थरथराई जान्छ र अरु समाजको जग माथि गहिरो कुप्रभाव पर्नजान्छ।

यी ती नियमहरु हुन् जुनलाई इस्लामी धर्म नितिले मानिसहरुको जीवन माथि निर्धारित गरेको छ । यस कारण कि मनिसले आफ्नो व्यक्तिगत तथा शरीरका अधिकारहरुलाई पूर्तिगर्न को लागि अर्काका अधिकारहरुलाई खोस्नु हुदैन वा उनमा कुनै कमी गर्नु हुदैन। तर मानवताको सांस्कृतिको उन्नति तथा कुशलताको लागि मात्र यही कुरा प्रशस्त छैन कि मानिसले अरुहरुलाई कुनै किसिम को हानि न पुऱ्याओस। बरु यसको साथै साथमा

यो पनि आवश्यक छ कि मानवताका सम्बन्धहरु वा मेलजोललाई यस प्रकार स्थिर राखोस् कि तिनी एक अर्काको भलाईको कार्यमा एक अर्कालाई सहायता गरुन अरु सामाजिक आवश्यकताहरुमा एक अर्कालाई सहयोग पनि गरुन् ।

अब म निम्नलिखित नियमहरुको शांराश प्रस्तुत गरिरहेको छु जो इस्लामी धर्म नीतिले यसलक्ष्य को लागि बनाएको छ ।

क. साँचो कुरा यो छ कि मानवीय सम्बन्धहरु को प्रारम्भ परिवारिक जीवन बाट हुन्छ । यसैले जरुरी यो छ कि तपाई अर्का कुराहरु भन्दा पहिला को परिवारिक जीवन माथि ध्यान गर्नुस् । कुटुम्ब -परिवार)असलमा श्रीमान श्रीमती (जोई–पोई)र उसको सन्तानको संगठन हुन्छ । यसैले इस्लामले जुन वस्तुमाथि कुटुम्बको जग राख्दछ त्यो यो हो कि पतिको जिम्मेदारी छ कि त्यो कुटुम्ब (परिवार )को लागि धनलाई आर्जन् गरोस र उसका आवश्यकताहरुको पूर्तिगरोस र भए भरका

कुटुम्बहरुको रक्षा गरोस् । र स्वास्नी को जिम्मेवारी यो छ कि पति वा सन्तानको लागि ठूलो भन्दा ठूलो सुविधाहरु देओस । साथै सन्तानहरुको शिक्षा दिक्षा र सुधारतर्फ ध्यान गरोस र सन्तानको जिम्मेवारी यो छ कि आफ्नो आमा बाबु को अनुसरण गरुन र उनको आदर गरुन र उनको बुढेसकालमा उनको सेवागरुन । इस्लामले यस लक्ष्यको लागि कुटुम्ब, रीति, भलाई वा अच्छाईको बाटोमा हिडन् को लागि दुइटा कुराको ब्यवस्था गरेको छ ।

पहिलो युक्ती यो छ कि पोई तथा बुबालाई कुटुम्बको मुखिया र उस विषयहरुको रक्षक नियुक्त गरेको छ । यो असम्भव छ कि कुटुम्बको रीति बिना कुनै रक्षक को होस् । यदि कुटुम्बहरुका प्रत्येक सदस्य आ आफ्नो इच्छा राख्दै छ र आफ्ना क्रियाहरुको बारेमा कसैको समक्ष उत्तर दायी न होस त कुटुम्बमा प्राय: उथल् पुथल् तथा फूट उत्पन्न हुन्छ फेरि उसमा प्रसन्नता, शान्ती,

सन्तुष्टता को समाप्ति आवश्यक भइजान्छ। यिनी नराम्रो कुराहरुलाई टाढा गर्नको लागि जरुरी यो छ कि परिवारको एउटा शासक हो जो उसका विषयहरुको जिम्मेदार हो। लोगने मानिस नै त्यो हुन सक्दछ जुन घरमा रहनेहरुको पालन पोषण तथा उनको रक्षा को लागि उत्तरदायी हुने छ। यसै प्रकार त्यो कमाई गर्नको पनि जिम्मेदार हुन्छ र यसै प्रकार आवश्यक छ कि त्यही नै रक्षाको पनि उत्तरदायी होस्।

दोस्रो युक्ती यो छ कि इस्लामले लोगने मानिसको काँध माथि घरदेखि बाहिर सम्मका कार्यहरु तथा विषयहरुको जिम्मेदारी हाले पछि स्वास्नी मानिसलाई आदेश दिएको छ कि त्यो घर बाट बाहिर बिना कुनै आवश्यकताको न निस्कोस। यसैले घर बाट बाहिरका कामहरुको जिम्मेवारी बाट उसलाई मुक्त गरिदिएको छ। यसले गर्दा कि घरमा बसेर आफ्नो जिम्मेवारी शान्ति वा सन्तुष्टता सित पूरा गरोस। घरको नियम वा

नानीहरु को रेखदेखमा उसलाई घर बाट बाहिर जानामा बाधा न परोस्। तर यसको मतलब यो होइन कि स्वासनी मानिसको लागि घर छोडेर न जान परोस्। बरु उसलाई आवश्यक छ भनि आज्ञा दिइन्छ कि उ बाहिर जाओस्। धर्म नीतिले मात्र यो चाहन्छ कि उसको जिम्मेदारी को केन्द्र घरनै रहीरहोस् । र त्यो आफ्नो सम्पुर्ण शक्ति तथा बुद्धि जुनउसले पाएकोछ त्यो मात्र आफ्नो घर तथा सन्तानको रेखदेखमा खर्च गरोस्। यस कारण कि त्यो एउटा राम्रो मानिस र जीवनका जिमेवारीहरु को रक्षक बनेर सफलता प्राप्तगरुन।

रगत सम्बन्धी सम्बन्धहरु अथवा विवाहहरु द्वारा परिवार बढ्छ। जब मानिसहरुले यस परिधि भित्र एक आर्काको सम्बन्ध राख्दछन् भनि धर्मनीतिले उनिलाई एकआर्काको सम्बन्धको राम्रो तथा आपसमा एक आर्काको साहायाता गर्नको लागि केही नियम नियुक्त गरेको छ । यिनी नियमहरुमा केही यस प्रकार छन्।

१.धर्म नीतिले केहि लोगने मानिसहरु र केहि स्वास्नी मानिसहरुलाई एक अर्काको लागि हराम गरि दिएको छ (अर्थात बिहे गर्नु )। जुन आपसमा मिली जुलीकन् बस्दछन् जस्तै आमाको दोश्रो पति( पोई),श्रीमतिको दोश्रो पतिकी छोरी, बाबुकी जोई( आमा),स्वास्नीको दोश्रो पोईको छोरा। साक्खे दाज्यु भाई,बहिनी,अथवा दूधको सम्बन्धीदाजू भाई तथा दिदी बहिनी , काका भाईकी छोरी (भतिजी), फुपू भतीजा, मामा भान्जी, जोईको आमा (सासु), आइमाइको छोरीको ज्वाईं , मौसी (सानीमा) भान्जा, पोईको बुबा (ससुरा), मानिसको छोरा को जोई(बुहारी), यिनी सबै सम्बन्धीहरुलाई हराम नियुक्त गरिदिनका धेरै लाभहरु मध्ये बाट एउटा यो पनि छ कि यस प्रकारले मानिस तथा आईमाई हरुको सम्बन्ध पवित्र तथा सफा र स्वच्छ रहुन्। अरु तिनीहरु आपसमा प्रेम श्रद्धा को साथ बिना कुनै संकोच वा कठिनाईको मिली जुली बसुन्।

२. इस्लामले यिनी सम्बन्धहरुको पछि परिवारका अरु सदस्यहरुको बीचमा विवाह गर्न उचित र ठीक भनेको छ। यसले कि प्रेमको बचनलाई अरु सुदृढ गरुन् । जुन एकअर्काको रीतिरिवाज चाल चलन् कुरा ब्यवहार थाहापाएका हुन्। उनको माझमा विवाह गर्नु यिनीहरुको तुलनामा जुन एकअर्कालाई पहिला देखि चिन्दै तथा जान्दैनन् धेरै सफल हुन्छ। यसैले इस्लामले अर्काहरुको तुलनामा आफ्नो कुल परिवारमा विवाह गर्नलाई श्रेष्ठता दिएको छ।

३. किनकि परिवारमा धनवान निर्धन, राम्रा नराम्रा सबै हुन्छन् । यसैले इस्लामले यो कुरा स्पष्ट गरिदिएको छ कि मानिसहरुका अधिकारहरु मध्ये बाट मानिस माथि सब भन्दा धेरै अधिकार सम्बन्धिहरुलाई छ। यो त्यो कुरा हो जसलाई धर्म नीतिले“सिलारह्मी”(सम्बन्धीहरु संग राम्रो ब्यवहार गर्नु) भनेको छ । कुरआन तथा सुन्नतमा “सिलारह्मी”को बारेमा बारम्बार सावधान गरिएको छ । सम्बन्धलाई विच्छेद गर्नु पाप भनिएको छ।

यदि कुनै निर्धन माथि कुनै परेशानी आइपरोस भने उनीहरुलाई जुन अरु सम्बन्धिहरुको तुलनामा धेरै धन राख्दछन् उनको जिम्मेदारी छ कि उसको सहायता गर्नको लागि उसको घर पुगुन् रउसलाई सघाउ पुऱ्याउन् । जस्तो कि सम्बन्धिहरु को अधिकारको दानको विषयमा अर्काको अधिकार माथि श्रेष्ठता दिएको छ ।

४. इस्लामले "तरका"(पैतृक धन्)को नियम पनि बनाएको छ । यदि कुनै मानिसको मृत्यु भइसकेको छ जसले आफुपछि सम्पत्ति छोडछ भनि त्यो उसको "तरका" हो । अब यो सम्पत्ति एकै ठाउँमा केन्द्रित तथा खजाना बनेर नरहोस । बरु जरुरी यो छ कि प्रत्येक सम्बन्धि यस बाट उन आदेशहरुको अनुसार जुन कुरआनले बनाएको छ । सम्बन्धिको निकटताको आधारमा आफ्नो भाग प्राप्त गरुन । यस प्रकारले एक व्यक्तिको धन सबै सम्बन्धितहरु को बीचमा बटि जान्छ र उनीहरु त्यस धनबाट उसको मृत्युपछि लाभवन्तित हुन सकुन ।

इस्लामको यो त्यो कानुन हो जसको कुनै उदाहरण प्राचीन तथा अन्तरराष्ट्रीय नियमहरुमा पाइन्न् । तथापि हिजो आज केहि जातिहरुले इस्लामको यस नियम लाई हेरेर यस प्रकार को नियम बनाउन थालेका छन् । तर खेद हुन्छ स्वयं मुसलमानहरुले आफ्नो बुद्धिहीनताको कारणले यस नियमको विरोध गरेका छन् । र उनमा छोरीहरुलाई सम्पत्ति नदिने रोग आई सकेको छ । जुन अत्यन्त अत्याचार वा कुरआनको आदेश को विरुद्ध छ ।

(ख) परिवारका सम्बन्धहरुको अतिरिक्त मानिसले आफ्नो छरछिमेकी,मित्र, बस्तीमा बस्ने अरु मानिस र उनीहरु जसको साथ उसको विभिन्न प्रकारको कार्य पर्छ र सम्बन्ध राख्दछ । इस्लामले यिनी सबैको साथ सच्चाई वा न्याय वा राम्रोगुण तथा समानताको साथ रहन्को आदेश दिएको छ जस्तो कि आँफै मानिसले चाहन्छ कि मानिसहरुलाई अरुहरुले सताउन् न पाउन् । यसै प्रकारले उसलाई चाहिन्छ कि अरुहरुको साथ पुण्य तथा

सच्चाईमा सहायताको आधार माथि मानिसहरुलाई आफ्नो दुर्व्यवहार तथा दुष्कर्म बाट शुरक्षित राखोस । अधिकारहरुलाई पूर्ण गर्नको अन्त हुदैन । जुन नजिकै (निकट) का सम्बन्धित हुन् तिनी राम्रो ब्यवहारको धेरै योग्य हुन्छन् । उनीहरुमा छिमेकी पनि छन् । हजरत जिब्राईलले हजरत मोहम्मद स.अ.व. लाई छिमेकी (पडोसी) को सम्बन्धमा बारम्बार अनुरोध गर्नु भए । यहाँ सम्म कि हजरत मोहम्मद स.अ.व.ले यो संशय गरेको कि त्यो उनलाई उत्तराधिकारी बनाई दिनेछन् । अरु यो छिमेकी (पडोसी) को अधिकार को बडाईले गर्दा थिए । हजरत मोहम्मद स.अ.व ले एउटा यहूदी छिमेकीलाई जब उहाँले उसलाई देख्नु भएन भने उसलाई भेटन जानु भयो । फेरि मानिसमाथि अर्का मुसलमानहरुका अधिकारहरु पनि छन् । उनीहरु मध्ये जुन भोकै हुन् उनीहरुलाई खाना खुवाउनु, जुन नाङ्गै हुन् उनीहरुलाई लुगा दिनु । यदि त्यो त्यसको शक्ति भएको होस् । अरु कुनै

संकटमा होस् भने उसको सहायता गरोस् । रोगीलाई हेरचाह गर्ने उद्देश्यले जाओस । भनि यदि कुनै गलत बाटोमा हिडन् लागेको छ भनि सही मार्गदर्शन गरोस् । अरु जुन कमाई गर्न योग्य छैन त्यो त्यसको लागि यस्तो काम रोजोस् जसबाट त्यो र उसको परिवारको रोजी प्राप्त गर्न सकोस् । हदीसमा आएको छ कि" मुसलमान मुसलमान को भाई हो उसमाथि अत्याचार नगरोस " । जस्तो कि कुरआनमा आएको छ ।

(وتعاونوا على البر والتقوى ولاتعاونوا على الاثم

والعدوان ) المائده ٢

" पुण्य तथा परहेज गारीमा (धर्म परायणतामा )आफन्तमा एक अर्काको सहायता गर, पाप तथा अत्याचारमा सहायता न गर" (५:२)

अरु यो पनि आएको छ ।

(انما المؤمنون اخوة) الحجرات ١٠

"ईमानवाला मानिसहरु आफन्तमा भाई-भाई हुन् (४९: १०)
उस बाहेक मुसलमानहरुको बीच र उनीहरुको बीच जसको उनी माथि अधिकार छ अनेकौं प्रकारको सम्बन्ध हुन्छ जस्तो कि अल्लाहले भनेको छ।

(وان احد من المشركين استجارك فأجره حتى يسمع كلام الله ثم ابلغه مأمنه ) التوبة ٦

"यदि कुनै नास्तिकले तपाई बाट शरण मांगोस भने उसलाई शरण देऊ यंहा सम्म कि त्यो अल्लाहको कुरा सुनोस फेरि त्यसलाई शुरक्षित स्थानमा पुऱ्याई दिनुस्। (९ :६)
१. इस्लामले पुरुषहरु वा महिलाहरुको बीचमा यदि तिनी यस्तो सम्बन्धित हुन् जसको बीचमा विवाहलाई धर्म नीतिले उचित मानेको छ। त्यो त्यस्ता ब्यक्तिहरुको आपसमा मेलमिलाप बाट मनाही गरेको छ। अरु यो कुरा उनको चरित्र वा

मानमर्यादाको रक्षाको लागि छ ।अरु स्पष्ट गरेको छ कि यिनी साँचो मुसलमान तथा स्त्रीहरुको लागि एकसाथ मन तथा दृष्टिको पवित्रताको साधन हो । यसले गर्दा कि स्त्रीपुरुषको सम्बन्धको आरम्भ दृष्टिबाट नै हुन्छ । अल्लाह ले भनिएकोछ ।

" (ओ नबी) भनिदेउ ईमान वालाहरु लाई कि तिमीहरु आफ्नो योनीको रक्षा गर (२४ : ३०):- स्त्रीहरुको लागि यस्ता कार्यहरु नियुक्त गरिएका हुन् जसलाई पुरुषहरु गर्न सक्दैनन् । जस प्रकार पुरुषहरुका केही काम छन् जसलाई स्त्रीहरु गर्न सक्दैनन् । स्त्रीहरुलाई घरमा रहन् तथा सुख शान्तिको साथ घरको काम गर्नको आदेश दिइएको छ तथा उनलाई उनको लोगने मानिसका लागि शान्तिका साधन् तथा वस्त्र मानिएको छ । पुरुष नै जीवनको मैदानमा परिश्रम गर्छ । जब त्यो आफ्नो घर फर्कन्छ त आफूलाई सुखचैन पुऱ्याउनको अभिलाषी हुन्छ । र यो कुराहरु आफ्नी श्रीमतीको मार्फत नै पाउन सक्छ । जुन घरमा बसेर स्वयं

आफू लाई र आफ्नो पतिलाई खानापानी वा आरामको प्रबन्ध गरोस । यस्तो पत्निको विरुद्ध जुन स्वयं दोकान (पसल) कारखाना अथवा कुनै अर्को कार्य गर्ने वाली हो भनि यस्ता पत्नीहरु पुरुषको समान कामको समाप्ति भएमा थाकिएको र विवश हुन्छिन् । त्यो स्वयं ने आफ्नो लागि सुखशान्ति वा चैनकी वा आफ्नो पतिको सेवा एकै साथ गर्न योग्य हुदैन ।

२- इस्लामले स्त्रीहरुलाई आफ्नो श्रृंगार तथा सजावटलाई जाहिर गरेर बाहिर आउन्लाई मिनाही गरेको छ । यसले गर्दा कि यसमा पुरुषहरुको कामवास्ना भडकाउने तथा उनको पापी हुन को अनुमान हुन्छ । यसै प्रकार स्त्रीहरुको रक्षाको पनि यसको अभिप्राय छ । यसैले त्यो पुरुषहरुको कठोरता वा स्वयं लाई पुरुषको निशाना न बनाई दिउन् । यसैले स्त्रीपुरुषहरुलाई आफ्नो - आफ्नो ढंगको लुगा लगाउन लाई आदेश दिइसकिएको किनकि अर्को कुनै यस शंकटको सिकार न बनुन् ?

३- इस्लाम यस्तो खेल (क्रीडा)तमाशा, दिल्लगी हँसीठट्ठा रुचाउदैन । जुनकि मानिसहरुलाई चरित्रहीन न गरिदेउन् । नराम्रो इच्छाहरुलाई भडकाउने वाला समय, स्वास्थ्यहरु तथा धनलाई नष्टगर्ने वाला हुन् ।

४-मुसलमानहरुको एकता तथा सामुहिक सुधारको रक्षाको लागि उनीलाई सावधान हुनको आदेश दिएको छ कि आफु आफुमा फुट इर्ष्या बाट बाँचुन् । गिरोह वा गुटबन्दी साथै झगडाहरुबाट टाढा रहुन् । फेरि पनि यदि कुनै विषय बापतमा मतभेद भइसकेको अवस्थामा साँचो मनले कुरआन तथा हदीस बाट सहायता लिएर मात्रै कुनै निर्णय गरुन् यस बाट पनि कुनै परिणाम हल् भएछैन भनि यस विषयलाई अल्लाह माथि छाडी दिनु । आफु आफुमा लडाई न गरुन् । एकअर्काबाट मिलेर सामुहिक सुधार जस्ता कार्य गरुन । उनी कार्यहरुमा सहायता गरुन । आतंक वादीहरु, दगां फसाद गर्नेहरुबाट टाढा रहीरहुन् । आफ्नो शक्तिलाई नाश हुने बाट

बचाउन्को साथै आफ्नो समुदायलाई टुटफूट बाट कलंकित न गरुन् ।

५-इस्लामले मुसलमानहरुलाई यस कुराको आज्ञा दिएको छ कि उनीहरु अर्का धर्महरुका मानिसहरु बाट विद्या र ज्ञान सिकुन् र उनीबाट लाभदायक कलाहरु सिकुन् तथा तिनीहरुलाई आफ्नो जीवनमा उनको अनुसरण गर्न बाट मनाही गरेको छ । किन कि कुनै पनि समुदायले अरुहरुको अनुसरणलाई त्यस बखत अपनाउछ जतिखेर आँफै आफू समुदाय को दुर्दशा ,नीचता ,वा दुष्टता भएको अपेक्षा अरु समुदायको श्रेष्ठता, बडाई तथा उन्नति (तरक्की) मानेर स्वीकार गरिलेउन् । यो आधीनताको एउटा नराम्रो किसिम हो र आफ्नो पराजय र नाशहुनु लाई मानिलिनुहुन्छ । यसको परिणाम यो हुन्छ कि यस समुदायको संस्कृति समाप्त भैजान्छ । यसैले हजरत मोहम्मद स.अ.व.ले मुसलमानहरुलाई अरु जातिहरु जस्तै देखादेखी गर्नले वा उनको रीति रिवाजहरुको अनुकरण गर्न बाट अति कठोर

शब्दहरुमा मिनाही गर्नु भएको छ र प्रत्येक त्यो व्यक्ति वा मानिस जसलाई अलि कति पनि बुद्धि दिइएको छ । त्यो यो कुरा बुझ्नन् सक्छ कि कुनै जातको शक्ति न त उसको वस्त्रको आधार माथि निर्भर छ न त उसको जीवनको तरिका (विधि) बाट उसको ज्ञान र राम्रो विधि तथा उसको कार्य गर्नको शक्ती को आधारमा हुन्छ । यसैले जुन कोही शक्ति र उन्नती प्राप्त गर्न चाहन्छ सो उसलाई अर्को जातहरु बाट शक्ति तथा उन्नति र उनलाई प्राप्त गर्ने उपायहरु त्था साधन्हरुलाई थाहा पाउनु पर्छ । जसबाट ती समुदायहरु शक्ति प्राप्त गर्छन् र उता तिर बाट आकर्षित हुनुहुन्न । जस बाट समुदायको विनाश हुन्छ र अर्को जातिहरुमा लीन भइ जान्छ र अन्तमा आफ्नो जीवन र उसका साधनहरुलाई समाप्त गरिदिन्छ ।

मुसलमानहरु लाई यस कुरा बाट पनि मनाही गरिएको छ कि अर्को धर्म वालाहरु बाट भेदभाव गरुन् र तिनीहरुलाई कुदृष्टि सित हेरुन् र उनका

देवी,देवताहरुलाई अपशब्द भनुन् । यसै प्रकार यस कुरा बाट पनि मिनाही गरिएको छ । कि उनी बाट ब्यर्थको लडाई झगडा फसाद न गरुन् बरु तिनीहरुलाई आफ्नो धर्मको सम्बन्धमा भन्नु र थाहा दिनु र उनीलाई आफ्नो धर्मको बाटोमा हिडनलाई निमन्त्रण दिएर आफ्नो सम्बन्ध लाई आरम्भ गरुन ।यदि अर्को धर्मवालाहरु मुसलमानहरु को साथ मित्रता गर्न चाहन्छन् भने उनीलाई इस्लाम धर्मका कुराहरुलाई बुझ्न् समझन् को अवसर देउन् । र जुन नास्तिकहरुले अल्लाह को बाटोलाई न रोकुन् । अरु मुसलमानहरुको अधिकार माथि आक्रमण नगरुन । भने जरुरी छ कि यस्ता मानिसहरु संग मुसलमानहरुले राम्रो ब्योहार गरुन् । जति हुनसकोस उनीबाट प्रेम -माया गरुन, दया, कृपा, तथा राम्रो गुणको साथ बसुन् । अरु अल्लाह को धर्म नीतिको मार्फत जुन उसले उनीहरुका लागि रुचाएको छ । उनको साथ भलाईको ब्यहोर अपनाउनु । उनी संग अन्याय,अत्याचार,दृष्टीहीनता,

अरु उनको सम्बनध्मा नराम्रो बिचार न राखुन् दु:ख न देउन्, उस कारण कि यी कुराहरु इसलाम को आदेश र मुसलमानहरुको स्वभावको बिरुद्ध छन् । उसलाई यस्तो बनाइएको छ । कि त्यो अरुहरुको लागि उदाहरण बनोस् जसलाई मानिसहरु राम्रो गुण,खुल्लामन् र साँचो बोल्नको विषयमा अपनाउन् र उनको हृदयलाई आफ्नो अधिकार तथा न्याय माथि आधारित पवित्र कार्यको मार्फत उनलाई सानो वा आफुभन्दा ठुलो समझिए बिना उनको मनलाई आकर्षित गरुन् । बरु मुसलमानहरु सित अर्का नास्तिकहरु शरण मागुन् भने इस्लामले शरण दिने आदेश दिएको छ । अल्लाहले भनेको छ ।

(وان احد من المشركين استجارك فاجره حتى يسمع كلام الله ثم ابلغه مأمنه) التوبة ٦

" यदि कुनै नास्तिक (काफिर) तपाई सित शरण मागोस भने उसलाई शरण दिनु किन कि त्यो

अल्लाहको कुराहरु सुनोस र फेरि उसलाई शुरक्षित ठाउँमा पुऱ्याई दिनुस् " । -९:६)
यस प्रकार कुनै अर्को धर्मवाला शरण मागेको अवस्थामा उसलाई शरण दिने र उसलाई साँचो कुरा वताउने फेरी उसलाई यस्तो ठाउँमा पुऱ्याउने आदेश दिएको छ कि जहाँ त्यो शान्ति पूर्वक रहि रहोस ।
४- अब म चौथो श्रेणी का अधिकारहरुको वर्णन गर्छु । नि:सन्देह अल्लाहले मानिसलाई आफ्नो धेरै जसो सृष्टि माथि श्रेष्टता दिएको छ र उसलाई आदेश (हुक्म) दिएको छ कि आफ्नो शक्ति बाट उनीलाई आफ्नो आधीनमा(मातहत)गरेपछि उनको प्रयोग गरोस् र उसलाई यस कुराको पनि आज्ञा दिएको छ कि उनीबाट आफुले चाहे अनुसार सेवा लेओस र उनीहरु सित लाभ उठाओस र भूमि माथि सब भन्दा श्रेष्ठ हुनको कारणले यो उसको कानुनी अधिकार छ तर यिनी कुराहरुको तुलनामा अल्लाहले उनी प्राणीहरुको पनि केहि अधिकार

राखेको छ । यिनीहरु मध्ये एउटा यो हो कि उनलाई नष्ट नगरुन् । अरु विना कुनै आवश्यक्ता को उनीलाई दु:ख,तथा कष्ट नदेउन अरु यदि आवश्यक छ भनि उसको कतर्ब्य छ । कि उनलाई त्यतीनै कार्यको भारी देउन जति उसको लागि जरुरी छ । अरु उनबाट सेवा लिने लाभ लिने तरिकामा पनि सही वा उचित साधनको प्रयोग गरुन । इस्लामी धर्मनीतिले यस प्रकारका धेरै आदेशहरुबाट परिपूर्ण छ । यसैले मानिसलाई उसले बिना खानको आश्वयक्तालाई हानि बाट वाच्नको अतिरिक्त प्राण लिने इजाजत र अधिकार दिएको छैन । मनलाई बहलाउन को लागि उनको प्राण न लिउन् । इस्लामी धर्म नीतिमा यो पनि छ कि जुन पशुहरुलाई खान्छन् उनको प्राणलिन को लागि जबह (काटिनु,हलाल गर्नु ) गर्नको नियम बनाएको छ । जुन उनको लाभदायक मासु प्राप्त गर्नको लागि सबभन्दा राम्रो साधन हो । जबह गर्नको अतिरिक्त सबै तरिका पशुहरुको लागि सरल भए

पनि मासुको लाभमा कमी गरिदिन्छ अरु यदि कुनै तरिका जबह गर्नु भन्दा कुनै तरीकाले मासु को लाभ को रक्षा गर्नेहोस भने त्यो जनावरको लागि धेरै नै कष्टदायक हुन्छ । इस्लामले यिनी दुबै तरिकाहरुबाट बाच्न चाहन्छ। र जनावरहरु लाई निर्दयता संग प्राण लिनु बाट मनाही गरेको छ। यसै प्रकार इस्लामले धेरै जस्ता घातक विशैले पशुहरुको प्राण लिने इजाजत यसले गर्दा दिएको छ कि मानिस को प्राण यिनी घातक तथा विषैले जनावरहरु को प्राण भन्दा अधिक महत्वपूर्ण तथा बहुमूल्य छ । त पनि यसको अतिरिक्त उनलाई कष्ट दिएर प्राण लिने आज्ञा दिएको छैन। यसै प्रकार उनी पशुहरुलाई भोकै राख्नाले जुन लाई सवारी तथा भारी बोकन्को लागि प्रयोग गर्छन र उनको शक्ति भन्दा बढता काम लिनु र उनलाई निर्दयतापूर्वक पिटनु बाट पनि मिनाही गरेको छ। इस्लामले यस कुरालाई पनि रुचाउन्दैन कि हामी चराहरुलाई पनि बिना आवश्यक्ता को कैद गरि

राखौं । इस्लाम यस कुरालाई पनि रुचाउदैन कि मात्र पशु, चराचुरुङ्गीहरुलाई होइन बरु रुखहरुलाई पनि कुनै किसिम को हानि न पुऱ्याऔं । हामी लाई अधिकार छ कि फल्लाई टिपौं तर यो अधिकार छैन कि फल्लाई व्यर्थमा नष्ट गरौं । अथवा हाँगा लाई भाँचि बर्बाद गरौं । अथवा बिना कुनै आवश्यक्ताको उनलाई काटी दिऔं । यस भन्दा बढी यो कि इस्लामले मात्र रुखहरु को लागि यो नियम बनाएको होइन बरु प्राण हीन कुराहरु लाई नष्ट गर्नु अनुचित भनिएको छ । यसैले इस्लामले बिना आवश्यक्ता को पानी बगाएर नष्ट गर्नलाई अनुचित भनेको छ ।

विश्व सम्बन्धी सदैव रहिरहने धर्मनीति :- अहिले सम्म जो सुकै मैले वर्णन गरेको छु त्यो मात्र त्यस प्रकाशित धर्मनीति का आदेशहरु तथा नियमहरु को संक्षिप्त शांराश हो । जसको साथ हजरत मोहम्मद स.अ.व सम्पूर्ण संसार को लागि पठाइएका हुन् । यस धर्मनीतिमा विश्वास तथा अमल (कर्म) बाहेक

कुनै कुरा मानिस र मानिसको बीचमा केही अन्तर छैन अरु सत्यता यो हो कि ती सबै धर्मनीतिहरु तथा धर्म जसमा मानिस –मानिस को बीच वंश, देश, वा रङ्ग (वर्ण) को आधार माथि ब्योहार गरिएको छ । त्यो विश्व सम्मबन्धि धर्मनीति हुन सक्दैन । यसले गर्दा कि स्वाभाविक्ता बाट यो कठिन छ कि यस वंशको कुनै ब्यक्ति त्यस वंश को कुनै व्यक्ति भन्दा बढेर हुनसकोस् । किन कि यस प्कार को धर्म मात्र कुनै विशेष प्रकार को कुनै विशेष जाति नै हुन सक्छ । यिनी सबै धर्महरुको तुलनामा इस्लामले एउटा विश्व सम्बन्धि धर्म नीति प्रस्तुत गरेको छ प्रत्येक त्यस मानिस को लागि जुन "लाइलाह इल्ललाह" (अल्लाह बाहेक कोही पुजनीय छैन ) माथि विश्वास गरेर उसमाथी ईमान ल्याऔस् । संभव छ कि त्यो मुसलमानहरुमा मिली जाओस अरु अधिकारहरुबाट लाभ उठाओस् जस बाट सबै मुसलमानहरु लाभ उठान्छन् । किन कि यस धर्मनीतिमा वशं, भाषा, देश वा वर्णको कुनै

भेदभाव छैन । फेरि यो धर्मनीति सदैव रहि रहने धर्मनीति हो । जसका नियमहरु कुनै विशेष जाति वा विशेष युग्को रीति रिवाजहरु को आधार माथि वनाइएको होइन बरु इस्लामी धर्म नीति प्रत्येक युग तथा प्रत्येक ठाउँ र मानिसको आवश्यक्ता लाई पुरा गर्न को लागि बनाइएको छ। उसलाई बनाउने त्यो हो जसले मानिसलाई जन्म दिएको छ । त्यो उसका आवश्यक्ताहरुलाई पनि जानेको छ। यसैले यस्तो धर्म निति प्रत्येक ठाउँ तथा प्रत्येक युगमा स्वभक्षव को अनुसार उचित हुन् सक्छ।

मेरो अन्तिम प्रार्थना यो छ कि सबै विशेषता अल्लाह को लागि छ । जुन सम्पूर्ण संसार को पालनहार हो । समाप्त

अनुवादक

अबू फैसल् /आबिद बिन सनाउल्लाह मदनी

इसलामिक सेन्टर उनेजा अल्कसीम पोस्ट बाक्स न०–८०८ फोन न०–०६–३६४४५०६ सऊदी अरब

स्थायी ठेगाना

अबू फैसल् /आबिद बिन सनाउल्लाह मदनीमौजा – मोहसड् वाडा न०–३ग.वि.स.तेनुहवा पोसट लुम्बिनी जिल्ला रुपन्देहीनेपाल

## هذا الكتاب يحتوي على:

---

* معنى الإسلام وحقيقته.
* السبيل إلى معرفة أمر الله وشرعه.
* معرفة الأنبياء والدلائل على صدقهم.
* أركان الإسلام والإيمان.
* بيان أن تطبيق الشريعة عبادة لله وأنها

  جاءت لحفظ الضرورات الخمس

  (الدين، والعقل، والنفس، والمال، والعرض).
* مصادر الشريعة.
* الجهاد في سبيل الله.
* الحقوق الواجبة على الأفراد.

# مبادى الاسلام

باللغة النيبالية

اعداد

حمود بن محمد اللاحم

مترجم

ابوفيصل /عابد بن ثناءالله مدنى

مكتب

دعوة وتوعية الجاليات بعنيزة

ص ب ٨٠٨ هاتف وفاكس ٣٦٤٤٥٠٦-٠٦/ ٣٦٥٤٠٠٤